# सोभियत भूमि

अंक २४ डिसेम्बर १९७६
५० पैसा

श्री ५ महाराजाधिराज सरकारको सोभियत संघको राजकीय यात्राको सचित्र विवरण यस अंकमा छापिएको छ ।





7076

# मैत्रीको भ्रमण

—भ. ग्लाजुनोभ

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्षमण्डल र सोभियत सरकारको निमन्त्रणामा नोभेम्बर १६ देखि २२ सम्म सोभियत संघको औपचारिक भ्रमण गरिबक्स्यो।

भ्रमण अघि सोभियत पत्रपत्रिकाहरूले यसले दुवै देशका जनताहरूको हितमा र साथै शान्ति र अन्तरराष्ट्रिय सहयोगको हितमा सोभियत–नेपाल सम्बन्धहरूको विकास र सुदृढीकरणलाई सघाउ पुऱ्याउने विश्वास व्यक्त गरे।

विशिष्ट अतिथिले मैत्रीपूर्ण देशको परिचय उज्बेकिस्तानको राजधानी ताशकन्दबाट शुरू गरिबक्सियो। त्यस गणराज्यमा नेपालका राष्ट्राध्यक्षबाट मौसूफका सवारी साथमा पाल्नुभएका अन्य व्यक्तिहरूकोसाथ गणराज्यको आर्थिक विकास प्रदर्शनी नजर गरिबक्सियो। उज्बेकिस्तानका श्रमजीवी जनताको जीवनमा सोभियत सत्ताकालमा आएका रूपान्तरणहरू स्पष्ट पार्ने उक्त प्रदर्शनी श्री ५ महाराजाधिराज सरकारबाट गहिरो रुचिकासाथ नजर गरिबक्सियो।

भोलिपल्ट, नोभेम्बर १७ का दिन, श्री ५ महाराजाधिराज मास्को सवारी होइबक्सियो। नेपाल र सोभियत संघका राष्ट्रिय झण्डाहरूद्वारा सजाइएको हवाइअड्डामा सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्षमण्डलका अध्यक्ष श्री निकोलाइ पोदगोर्नी, सोभियत संघको मन्त्रिपरिषद्का प्रथम उपाध्यक्ष श्री किरिल माजुरोभ र अन्य सोभियत अधिकारीहरूले मौसूफको स्वागत गर्नुभयो।

त्यही दिन नेपालका राष्ट्राध्यक्षले भ्ला. ई. लेनिनको समाधि र क्रेमलिन पर्खालस्थित अज्ञात सिपाहीको स्मारकमा फूलमाला चढाइबक्सेर सोभियत संघ र यसका जनताप्रति गहिरो आदर व्यक्त गरिबक्सियो।

त्यसपछि नेपाल नरेश श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव र सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्षमण्डलका अध्यक्ष निकोलाइ पोद्गोर्नी बीच क्रेमलिनमा वार्ता भयो। वार्तामा राजनैतिक, आर्थिक, सांस्कृतिक र अन्य क्षेत्रहरूमा सोभियत–नेपाल सम्बन्धका व्यापक प्रश्नहरूमाथि छलफल भयो र द्विपक्षीय सहयोगको विकासका बाटाहरू निश्चित गरिए।

वार्तामा जोड दिइएं अनुसार, आजको विश्वमा अन्तरराष्ट्रिय परिस्थितिको झुकाव देतांततिर बढ्दै जाने छ। सोभियत संघको शान्तिपूर्ण नीति र सबै राज्यहरू बीच मैत्री र



**श्री ५ महाराजाधिराज वीरेन्द्रवीर विक्रम शाहदेव सोभियत संघको राजकीय यात्राको सिलसिलामा मास्कोको भ्नूकोभो हवाइअड्डामा पुगि बक्सँदा सोभियत राष्ट्रपति निकोलाई भ. पोद्गोर्नी, सोभियत संघका प्रथम उपप्रधानमन्त्री तथा पोलिटब्यूरोका सदस्य श्री क. त. माजुरोभ, सोभियत संघका संस्कृति मन्त्री तथा पोलिटब्यूरोका सदस्य प. न. देमिचेभ मौसूफ सरकारको स्वागत–अभिवादन गर्नुहुँदैछ ।**

सहयोगको विकास गर्ने दिशामा यसले लिएका अग्रसरताहरूले यस सम्बन्धमा अत्यन्तै महत्त्वपूर्ण भूमिका खेल्दछन् । नेपाल लगायत धेरै देशहरूले सोभियत संघले संयुक्त राष्ट्र संघमा राखेको अन्तरराष्ट्रिय सम्बन्धहरूमा शक्ति प्रयोग नगर्ने सम्बन्धमा विश्व सन्धि गर्ने प्रस्ताव र शस्त्रास्त्रको होड रोक्ने र निःशस्त्रीकरण हासिल गर्ने सम्बन्धमा सोभियत सरकारले प्रकाशित गरेको स्मृतिपत्रको समर्थन गरे ।

वार्तामा सोभियत संघ अन्तरराष्ट्रिय सम्बन्धमा भेदभावको विरोध गर्ने नेपालको साम्राज्यवाद विरोधी र उपनिवेशवादी–विरोधी नीतिलाई सह्नीको दृष्टिले हेर्दछ र असंलग्नताको नीतिप्रति नेपालको निष्ठाको स्वागत गर्दछ भन्ने पनि औंल्याइयो । धेरै प्रमुख अन्तरराष्ट्रिय प्रश्नहरूमा सोभियत संघ र नेपालका स्थिति निकट वा मिल्दोजुल्दो रहेको तथ्यलाई ससन्तोष पुष्टि गरियो ।

**श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव मास्कोको भ्नूकोभो हवाइअड्डा पुगिबक्सँदा मास्कोका विद्यार्थी तथा नागरिकहरू मौसूफ सरकारको स्वागत अभिवादन गर्दैछन् ।**

सांझ सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्षमण्डल र सोभियत सरकारले विशिष्ट अतिथिको सम्मानमा भव्य क्रेमलिन प्रासादमा रात्रिभोजको आयोजना गरे । रात्रिभोजमा निकोलाई पोद्गोर्नीले भाषण गर्नुभयो र श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट बाट प्रत्युत्तर भाषण दिइबक्सियो ।

**श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव सोभियत संघको राजकीय भ्रमणको सिलसिलामा मास्कोको भ्नूकोभो हवाइअड्डामा सवारी होइबक्सँदा सोभियत संघमा अध्ययन गरिरहेका नेपाली छात्रहरूद्वारा मौसूफ सरकारमा स्वागत–अभिवादन चढाइँदै छ ।**

सोभियत राष्ट्रपतिले विशेष जोड दिएर

सम्बन्धको भविष्यबारे आशावदी हुन सकिन्छ । तिनको प्रगतिप्रति हाम्रो विश्वासको बलियो आधार छ। सोभियत संघ र नेपालका सम्बन्धहरू समानता, सार्वभौमिकता, क्षेत्रीय अखण्डता र आन्तरिक मामिलामा अहस्तक्षेपका दरिला सिद्धान्तमा आधारित छन् । सोभियत–नेपाल मैत्रीको सुदृढीकरण दुइ देशका जनताका हित अनुरूप हुनुको साथै शान्ति र अन्तरराष्ट्रिय सहयोग सबल बनाउने ध्येयको पनि अनुरूप छ।''

श्री ५ महाराजाधिराजको सोभियत संघको भ्रमण विश्वमा उल्लेखयोग्य सकारात्मक परिवर्तनहरू भइरहेको समयमा भएको श्रीँल्याउनु हुंदै निकोलाई पोद्‌गोर्नीले भन्नुभयो, आज देतांत र अलग अलग सामाजिक व्यवस्था भएका राज्यहरूको शान्तिपूर्ण सहअस्तित्वका सिद्धान्तहरूको सुदृढीकरण अन्तरराष्ट्रिय मामिलामा प्रमुख प्रवृत्ति भएको छ।

सोभियत राष्ट्रपतिले भन्नुभयो, ''अन्तरराष्ट्रिय राजनैतिक वातावरणलाई अरू सुधार्न शान्तिप्रिय राज्यहरूले गरेका प्रयासहरूले ऐतिहासिक घटनाक्रमलाई उल्ट्याउन खोज्ने र शीत युद्ध र नाभिकीय युद्धस्थितिमा फर्किन चाहनेहरूको कडा प्रतिरोधको सामना गर्नु परेको छ । त्यसैले स्थायी शान्तिको निमित्त साम्राज्यवादी शक्तिहरूले चलाएका शस्त्रास्त्रहरूको होडबाजी समाप्त गर्नु र निशस्त्रीकरण हासिल गर्नु जत्तिको महत्त्वपूर्ण काम आज अर्को छैन।''

प्रत्युत्तर भाषणमा नेपाल नरेश श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट



**श्री ५ महाराजाधिराज सरकारको सवारी मास्कोको रेड स्क्वायर हुँदै लेनिन समाधितर्फ चलाइँदैछ ।**

भन्नुभयो, ''श्री ५ महाराजाधिराज सरकारको सोभियत संघको यो राजकीय भ्रमण सोभियत-नेपाल सम्बन्धमा अविस्मरणीय घटना हुनेछ । ती सम्बन्धहरूको छोटो, केवल दुइ दशकको इतिहास छ तर यही छोटो समयमै हाम्रा दुइ देश बीच सच्चा पारस्परिक समझदारी र मैत्रीपूर्ण सहयोगका सम्बन्धहरूको विकास र गहकिलो प्रगति भएको छ भन्न पाउँदा मलाई गहिरो संतोष लागेको छ। हामी मौसूफको भ्रमणलाई सोभियत–नेपाल सम्बन्धलाई गहन र व्यापक बनाउने हाम्रो दुइ देशको आकांक्षाको अर्को पुष्टि मान्दछौं।''

सोभियत संघ र नेपालको सहयोगले राम्रा फलहरू दिन्छन् भन्ने श्रीँल्याउनु हुंदै निकोलाइ पोद्‌गर्नीले भन्नुभयो, हाम्रा देशका राजनेता र विशिष्ट व्यक्तिहरू बीच सबै स्तरमा हुने सम्पर्कहरू र व्यापारिक, आर्थिक, सांस्कृतिक र अन्य सम्बन्धहरू पनि अनुकूल रूपमा विकास भइरहेछन्। हाम्रो विदेश नीतिका लेनिनवादी सिद्धान्तहरूको सुदृढ पालन गर्दै, हामी नेपाल र यसका जनतालाई नेपालको स्वाधीनता, सार्वभौमिकता र आर्थिक आत्मनिर्भरताको अरू सबलीकरण गर्ने प्रयासमा सहायता गर्छौं।

''हाम्रा दुइ देश बीचको मैत्री र सहयोग निरन्तर वृद्धि भइरहेछ र सोभियत–नेपाल

**१७ नोभेम्बरका दिन श्री ५ महाराजाधिराज सरकार लेनिन समाधिमा सवारी होइबक्सियो र फूलमाला चढाइबक्सियो ।**

नेपाल र सोभियत संघ दुवै सार्वभौमसत्ता र स्वतन्त्रताका अविच्छिन्न परम्परा भएका देशहरू हुन् भन्ने औंल्याइबक्सियो । मौसूफबाट हुकूम भयो, "दोस्रो विश्वयुद्धमा दुवै देशका जनताले कांधमा कांध मिलाई एउटै लडाई लडेका हुन् । त्यस युद्धमा सोभियत जनताले देखाएको बहादुरी एवं देशभक्तिले नेपाली जनतामा गहिरो प्रभाव पारेको थियो। युद्धपश्चात् फासिस्ट अधिनायकवाद-लाई ढालेपछि सोभियत संघ विश्वको एक प्रमुख शक्तिराष्ट्र बन्यो र उसको विश्वव्यापी सम्बन्ध कायम हुँदै गयो । त्यस्तै नेपाल पनि आफ्नो क्षितिजलाई बिस्तारै बिस्तारै व्यापक बनाउंदै लैजाने अभिलाषा राखी प्रजातन्त्र र मानवीय स्वतन्त्वताप्रति जागरूक भई अघि बढ्न थाल्यो ।



**श्री ५ महाराजाधिराज सरकारबाट अज्ञात सिपाहीहरूको समाधिमा सवारी भई एक मिनेटसम्म मौन धारण गरिबक्सियो ।**

यस परिप्रेक्ष्यमा हाम्रा दुइ देश बीच आपसी सहयोगको आकांक्षा स्वाभाविकै थियो ।

१९५६ मा कूटनैतिक सम्बन्धको स्थापना गर्ने औपचारिक सम्झौता नेपाल–सोभियत सम्बन्धको इतिहासमा एक मोड थियो । यसपछि विभिन्न क्षेत्रहरूमा सहयोगको अभिवृद्धि हुँदै गयो । सोभियत संघको सहयोगले नेपालको आर्थिक निर्माणको पूर्वाधार सृजना गर्न सघाउनुका साथै केही हदसम्म आत्मनिर्भरता प्राप्तिमा पनि हामीलाई सहायता गर्‍यो। यसरी सन् १९५६ देखि नेपाल र सोभियत संघ दुवै मिलेर मितेरीको लामो बाटो संगै हिंडेका छन्। हामी दुवैले आपसमा मिली शान्ति र प्रगतिको समान लक्ष्य राखेका छौं र हामीलाई विश्वास छ, यसरी नै हामी दुवै विश्वमा बढी सहयोग र सद्भावना बढाउन योगदान गर्न समर्थ हुनेछौं र हाम्रो दुइ देश बीचको मित्रता, ठूलो र सानो, विकसित वा विकासशील एवं विभिन्न सामाजिक–राजनैतिक परिपाटी भएका देशहरू बीचको मित्रताको एक राम्रो उदाहरण बन्न सक्ने छ।

अन्तरराष्ट्रिय समस्याबारे बोलिबक्सँदै मौसूफ-बाट हुकुम भयो, आजको विषमता र असमानता भरिएको संसारमा शान्तिपूर्ण सह–अस्तित्वको कुनै विकल्प छैन। मौसूफबाट हुकुम भयो, कुनै मुलुकले शान्तिमा बाँच्न चाहन्छ भने उसले आफ्नो जनताका न्यूनतम आवश्यकताहरू पूर्ति गर्न सक्ने विकास स्तर प्राप्त गर्नै पर्दछ। त्यस्तै, थुप्रो धनराशी र ऐश्वर्य चाहने हो भने देशभित्र र वरिपरि



**१७ नोभेम्बर १९७६ मा क्रेमलिन प्रासादमा श्री ५ महाराजाधिराज सरकार तथा सोभियत राष्ट्रपति नि. भ. पोदगोर्नी बीच सौहार्दतापूर्ण वातावरणमा वार्ता भयो।**

शान्ति छाएपछि मात्र त्यस्तो परिकल्पना पूरा हुनसक्छ । यसले हामीलाई कुन तर्कसंगत निष्कर्षमा पुऱ्याउंछ भने शान्ति र प्रगतिमा निकट सम्बन्ध छ। सोभियत संघले नि:शस्त्रीकरण तथा तनाव कम गर्ने कार्यलाई लक्षित गरी एकपछि अर्को कदमको रूपमा आफ्ना जनताको सुविधा र समृद्धि लगातार बढाउंदै लगेको छ । शान्तिप्रिय तथा असंलग्न राष्ट्रको हैसियतले नेपाल यसको सन्हनी गर्दछ।

मास्कोमा आर्थिक एवं प्राविधिक सहयोग सम्बन्धी संझौतामा हस्ताक्षर भयो। यो सोभियत–नेपाल वार्ताका सबभन्दा महत्त्वपूर्ण सकारात्मक परिणामहरूमध्ये एउटा थियो । यस संझौताले सार्वजनिक क्षेत्रमा कैयौं नयां परियोजनाहरूको निर्माण निम्ति नेपाललाई सोभियत सहायताको परिकल्पना गरेको छ।

मास्कोमा राजहोइबक्सिदा नेपाल नरेशले मैत्री भवनमा सोभियत जनप्रतिनिधिहरूलाई दर्शन भेट बक्सियो । मैत्री भवनमा आयोजित सभालाई सम्बोधन गरिबक्सिंदै मौसूफ सरकारबाट दुइ देश बीच सांस्कृतिक सहयोगको महत्त्वमाथि जोड दिइबक्सियो। मौसूफबाट सोभियत संघको भ्रमणले सोभियत जनताले जीवनका सबै क्षेत्रमा हासिल गरेका उपलब्धिहरूसित प्रत्यक्ष साक्षात्कार हुने अवसर दिएको कुरा उल्लेख गरिबक्सियो । मास्को टेलीभिजनमा बोलिबक्संदा पनि विशिष्ट अतिथिबाट सोभियत संघको भ्रमणको बेला आफूमा परेका छापहरूको उल्लेख गरिबक्सियो। श्री ५ महाराजाधिराज सरकारबाट सोभियत नेताहरूसित भएका वार्ताहरूको उच्च मूल्यांकन गरिबक्सियो र तिनले नेपाल र सोभियत संघका जनताहरू बीच मित्रता र पारस्परिक समझदारीका सम्बन्धहरू अझ गहन बनाउन सघाउ हुनेछ भन्ने कुरामा जोड दिइबक्सियो ।

मास्कोमा वार्ताहरू समाप्त भएपछि श्री ५ महाराजाधिराज सरकार सोभियत उक्राइनको राजधानी किएभ सवारी होइबक्सियो। गणराज्यको सर्वोच्च सोभियत र सरकारका नेताहरूले त्यहाँ मौसूफ सरकारको हार्दिक स्वागत–अभिवादन गर्नुभयो ।

नोभेम्बर २१ का दिन मौसूफ सरकार सवारी होइबक्सेको हवाइजहाज किएभबाट ताशकन्दका लागि प्रस्थान गऱ्यो । भोलिपल्ट मौसूफ सरकारको स्वदेश फिर्ती सवारी भयो।

नेपालका राष्ट्राध्यक्षद्वारा सोभियत संघको भ्रमण र सोभियत नेताहरूसित मौसूफ सरकारका वार्ताहरूको महत्त्व भ्रमणको समाप्तिमा प्रकाशित

गरिएको वक्तव्यबाट पनि प्रमाणित हुन्छ । यसले प्रमुख अन्तरराष्ट्रिय प्रश्नहरूमा सोभियत संघ र नेपालका स्थितिहरूको समानता वा सामिप्य-लाई पुनः पुष्टि गरेको छ । वक्तव्यमा उल्लेख गरिएअनुसार, दुवै पक्षले कडा र प्रभावकारी अन्तरराष्ट्रिय नियन्त्रण अन्तरगत नाभिकीय निःशस्त्रीकरण लगायता आम तथा पूर्ण निःशस्त्री-करण हासिल गर्न सघाउ पुऱ्याउने आकांक्षा पुनः अभिव्यक्ति गर्नुको साथै विश्व निःशस्त्रीकरण सम्मेलन बोलाउने आवश्यकता स्वीकारे । सोभियत संघ र नेपालले शक्ति प्रयोग नगर्ने सम्बन्धमा चांडो विश्व सन्धि गर्ने कुरामा समर्थन जनाउंदै, त्यसले सबै राष्ट्रको सुरक्षामा नयां र बढी भरपर्दो व्यवस्था सुनिश्चित हुने जनाएका छन् ।

वक्तव्यमा भनिएको छ, सोभियत संघ र नेपालले विकासका उद्देश्यका लागि आ-आफ्नो प्राकृतिक स्रोत परिचालन गर्ने हरेक देशको न्यायसंगत अधिकार हो भन्ने कुरालाई ध्यानमा राखी समानताको आधारमा अन्तरराष्ट्रिय आर्थिक सम्बन्धको पुनर्निर्माण कार्यलाई सहायता गर्ने आ–आफ्नो इच्छा दोहोऱ्याए । दुवै देशले विकासोन्मुख मुलुकहरूले अन्तरराष्ट्रिय सम्बन्धमा भएको भेदभाव र असमानता हटाउनका लागि गरिएका प्रयासप्रति समर्थन जनाए ।

वक्तव्यले शान्तिको संरक्षण र अन्तरराष्ट्रिय शान्ति र सबलीकरणका प्रश्नहरूमाथि गहिरो ध्यान दिएको छ । यसमा भनिएको छ, सोभियत संघ र नेपाल भियतनामी जनताको विजयको स्वागत गर्दछन् र भियतनाम जनता तथा लाओस र कम्बोडियाका जनताको द्रुत प्रगति र समृद्धिको लागि शुभकामना व्यक्त गर्दछन् । जहाँसम्म दक्षिणी अफ्रिकाको स्थितिको कुरा छ, सोभियत संघ र नेपालले दक्षिण अफ्रिका गणराज्यमा अपार्थाइड र जातिभेदको अन्त्य, नामिबियाबाट दक्षिण अफ्रिकाको तत्काल वापसी र जिम्बाब्वेका जनतालाई सम्पूर्ण सत्ताको शीघ्रातिशीघ्र हस्तान्तरणको माग गरे । दुवै पक्षले मध्यपूर्वको तनावपूर्ण स्थितिप्रति गहिरो चिन्ता व्यक्त गरे र प्रत्यक्ष रूपले सम्बन्धित सबै पक्षहरूको सहभागितामा जेनेभा शान्ति सम्मेलनको काम चांडै नै पुनः चालु गर्ने पक्षमा विचार व्यक्त गरे ।

वक्तव्यले विगत दुइ दशकमा सोभियत–नेपाल सम्बन्धको सफल विकासलाई औंल्याएको छ र तिनको अरू बढी से बढी सुदृढीकरण निम्ति पारस्परिक आकांक्षाको पुनः उल्लेख गरेको छ । वक्तव्यले जोड दिएको छ, "सोभियत र नेपाली पक्षहरू वार्ताहरूका अनुकूल परिणामहरूमाथि संतोष व्यक्त गर्दछन् र नेपालका श्री ५ महाराजाधिराज सरकारबाट गरिबक्सेको सोभियत संघको भ्रमण सोभियत संघ र नेपाल बीच मैत्री र सहयोगको उत्तरोत्तर विकासमा महत्त्वपूर्ण योगदान हुनेछ भन्ने मान्दछन् ।"

# सोभियत संघ तथा नेपालका बीच सम्झौता सम्पन्न



**सोभियत संघको सहायताबाट बनेको सिमरा–जनकपुर राजमार्ग**



**सोभियत संघको सहायताबाट बनेको जनकपुर चुरोट कारखाना ।**

सोभियत संघ तथा नेपालका बीच आर्थिक तथा प्राविधिक सहयोग–सम्बन्धी नयां सम्झौतामा गत नोभेम्बर १९ तारीखमा मास्कोमा हस्ताक्षर गरियो । उक्त सम्झौतामा सोभियत संघको तर्फबाट सोभियत संघको मन्त्रिपरिषद् अन्तर्गत वैज्ञानिक–आर्थिक सम्बन्धको राजकीय समितिका अध्यक्ष स. अ. स्काचकोभ र नेपाल अधिराज्यको तर्फबाट सोभियत संघका लागि

**मंसीर ४ गतेका दिन नेपाल र सोभियत संघ बीच आर्थिक तथा प्राविधिक सहयोग संझौतामा हस्ताक्षर भयो । नेपालको तर्फबाट सोभियत संघका लागि शाही नेपाली राजदूत श्री जगदीश शम्शेर राणाले र सोभियत संघको तर्फबाट सोभियत मन्त्रीपरिषद् अन्तर्गत बैदेशिक आर्थिक सम्बन्ध समितिका अध्यक्ष श्री स. अ. स्कान घोभले संझौतामा हस्ताक्षर गर्नुभयो ।**



श्री ५ महाराजाधिराज सरकार मैत्री भवनमा आयोजित स्वागत समारोहमा । मंसीर ३ गते ।







त्यसै अवसरमा देखाइएको एउटा रूसी नृत्य ।

श्री ५ माहाराजाधिराज सरकारको सम्मानमा मैत्री भवनमा आयोजित सांस्कृतिक कार्यक्रममा मास्को कलेजका एक नेपाली विद्यार्थी-द्वारा प्रस्तुत गरिएको नेपाली नाच ।

श्री ५ अधिराजकुमारी शारदा शाह सोभियत संघको संस्कृति मन्त्रालय अन्तर्गत मास्को कोरियोग्राफी एकेडेमिक स्कूल सवारी होइबक्सियो र स्कूलको कामसित अवगत होइ-बक्सियो । दाहिने चित्रमा श्री ५ अधिराजकुमारी शारदा शाह भावी सोभियत ब्याले नर्तकीहरूको बीचमा ।

**मास्कोको मैत्री भवनमा श्री ५ महाराजाधिराज सरकारको भाषण दत्तचित्त भएर सुनिरहेका श्रोताहरू ।**

शाही नेपाली राजदूत श्री जगदीश शम्सेर राणाले मन्त्रीको स्तरमा हस्ताक्षर गर्नुभयो ।

हस्ताक्षर समारोहमा नेपालका परराष्ट्र-मन्त्री श्री कृष्णराज अर्याल, सोभियत संघका लागि नवनियुक्त शाही नेपाली राजदूत श्री ज्ञानेन्द्रबहादुर कार्की, वैदेशिक आर्थिक सम्बन्धहरूको राजकीय समितिका उपाध्यक्ष भ. स. सेर्गेएभ र अन्य सोभियत तथा नेपाली अधिकारीहरू उपस्थित हुनुहुन्थ्यो ।

सम्झौता मैत्री र पारस्परिक रूपमा लाभदायी सहयोगका सिद्धान्तहरूमा आधारित छ । यो सम्झौतामा नेपालमा सरकारी क्षेत्रमा नयां परियोजनाहरूको निर्माण गर्ने सम्बन्धमा, नेपालमा भौगर्भिक सर्वेक्षण कार्य गर्ने, अनेकन् परियोजनाहरूका लागि मेशीन, सामग्री र औजार-हरू आपूर्ति गर्ने र प्राविधिक सहायताको व्यवस्था गर्ने सोभियत विशेषज्ञहरूको सेवा उपलब्ध गराउने सम्बन्धमा सोभियत सहायताको व्यवस्था छ ।





मंसीर २ गतेका दिन भव्य क्रेमलिन प्रासादमा सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्ष-मण्डल र सोभियत सरकारले श्री ५ महाराजाधिराज सरकारको सम्मानमा रात्रिभोजको आयोजना गऱ्यो। उक्त प्रासादको एक कक्षमा श्री ५ महाराजाधिराज सरकारको स्वागत।



मास्कोमा विदेशी कूटनैतिक आयोगका प्रमुखहरूले श्री ५ महाराजाधिराजको दर्शन भेट गरे।



सम्झौतामा हस्ताक्षर सम्पन्न भएपछि श्री जगदीश शम्सेर राणा र स. अ. स्काच्कोभ दुवैले केही शब्द बोल्नुभयो। नेपाली राजदूत महोदयले नेपालको स्वतन्त्र अर्थ...





त्यसै अवसरमा देखाइएको एउटा रूसी नृत्य।



...को संस्कृति मन्त्रालय अन्तर्गत मास्को ...सियो र स्कूलको कामसित अवगत होइ- ... शारदा शाह भावी सोभियत ब्याले





श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव र श्री ५ अधिराजकुमारी शारदा शाहबाट क्रेमलिनस्थित शस्त्रास्त्रसंग्रहालय नजर गरिबक्सदैछ । मंसीर ३ गते ।



माथिको चित्रमा :–

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव र श्री ५ अधिराज कुमारी शारदा शाह शस्त्रास्त्र संग्रहालयको अर्को एउटा कक्षमा ।



श्री ५ महाराजाधिराज सरकारबाट मंसीर ३ गते दिन क्रेमलिनस्थित प्राचीन गिरजाघरको अवलोकन गरि बक्सदैछ ।

**नोभेम्बर १६ का दिन श्री ५ महाराजाधिराज सरकारको सवारी कीएभतर्फ हुन लाग्दा भ्नूकोभो हवाई अड्डामा सोभियत राष्ट्रपति निकोलाई भ. पोदगोर्नी, सोभियत मन्त्रिपरिषद्का प्रथम उपाध्यक्ष क. त. माजुरोभ तथा संस्कृति मन्त्री प. न. देमिचेभ (सबै पोलिटब्यूरोका सदस्य)–ले मौसूफ सरकारको विदाई गर्नुभयो ।**





**माथि दोस्रो :–**
**उक्राइनको राजधानी कीएभको मिखाइलोभ्स्की प्रासाद जहां मौसूफ सरकारको सम्मानमा उक्रेनको सर्वोच्च सोभियतको अध्यक्षमण्डल र उक्रेनको सरकारले रात्रीभोजको आयोजना गरेको थियो ।**

**माथि पहिलो :–**
**उक्रेनियाली गणराज्यको सर्वोच्च सोभियतको भवनको रात्रीवेलाको दृश्य ।**



**उक्राइन गणराज्यको सर्वोच्च सोभियतको अध्यक्षमण्डलका अध्यक्ष तथा अन्य उक्रेनियाली नेता र सार्वजनिक व्यक्तिहरू मौसूफ सरकारको दर्शनभेट गर्दै हुनुहुन्छ ।**

नेपालको राष्ट्रिय अर्थव्यवस्थाको विकासमा, देशको अर्थव्यवस्थाका मुख्य शाखाहरूको, सबभन्दा पहिला त सार्वजनिक क्षेत्रमा उद्योगको विकास निम्ति सहायता र ऋणहरू प्रदान गरेर, सोभियत संघले निकै ठूलो योगदान गरेको छ। नेपाललाई वार्षिक २.५ देखि ३ प्रतिशतको व्याजमा नेपाली मुद्रामा भुक्तानी हुने दीर्घम्यादी ऋण दिइएको छ। यसले त्यस देशलाई सबै भुक्तानीहरू वस्तु आपूर्तिको रूपमा गर्न सघाउँछ जसले सोभियत संघ र अरू समाजवादी देशहरूसित नेपालको विदेश व्यापार सम्बन्धहरूको विस्तारलाई प्रोत्साहित गर्दछ। वस्तु ऋणको रूपमा नेपाललाई निर्माण सामग्री (त्यस देशमा कमी भएका सिमेण्ट, फलाम, इस्पात आदि) र साथै तेल उपज र अन्य वस्तुहरू दिइएका छन् ।

सोभियत संघद्वारा आफ्ना वचनहरूको निश्चित समय र उच्च स्तरमा परिपालनले नेपालको आर्थिक विकास कार्यक्रमहरूको सफल कार्यान्वयनलाई सघाउ पुऱ्याएको छ । यो कुरा श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट मास्कोमा बक्सिएको भाषणमा उल्लेख गरिबक्सेको हो । मौसूफ सरकारबाट, अरू कुराको साथै, सोभियत सहायताले नेपाललाई केही हदसम्म आत्म–निर्भरता प्राप्त गर्न सघाएको पनि हुकुम भएको थियो ।

सोभियत–नेपाल आर्थिक सहयोगको इतिहास झण्डै २० वर्षको भएको छ। नेपाललाई निःशुल्क सोभियत आर्थिक तथा प्राविधिक सहायता प्रदान गर्ने सम्बन्धमा पहिलो संझौता अप्रिल, १९५९ मा सम्पन्न भएको थियो ।

यसका परिणामस्वरूप निश्चित समयभित्र जनकपुरको चुरोट कारखाना, बीरगंज चिनी मील, पनौती जलबिजुली घर र काठमाडौंमा कान्ति अस्पतालको निर्माण भयो। दुइ देशबीच अरू बढी आर्थिक तथा सांस्कृतिक सहयोग बारे अक्टोबर १९६३ मा नेपाल सरकारको प्रतिनिधिमण्डलद्वारा सोभियत संघको भ्रमणको बेला हस्ताक्षर गरिएको सोभियत–नेपाल संयुक्त वक्तव्य यसको अर्को चरण थियो। यो वक्तव्य नेपालमा एक कृषि औजार कारखानाको निर्माण सम्बन्धी १९६४ मा सम्पन्न गरिएको संझौताको आधार बन्यो। कारखाना १९६८ मा चालु भयो। त्यसै वर्ष ११० किलोमीटर लामो सिमरा–जनकपुर मार्गको निर्माण प्रारंभ भयो । पूर्व–पश्चिम राजमार्गको एक खण्ड,यस सडकको निर्माण १९७२ मा, निश्चित समयभन्दा एक वर्ष अगावै पूरा भयो ।

नेपाली अखबारहरूले बरोबर दोहऱ्याएका छन्, सोभियत सहायताद्वारा निर्मित औद्योगिक परियोजनाहरू राष्ट्रिय अर्थव्यवस्थामा महत्त्वपूर्ण भूमिका निर्वाह गर्दछन् । ठूलो मुनाफादायिताको लागि उल्लेखनीय भएकाले, अहिले तिनीहरू देशको कुल औद्योगिक उत्पादनको निकै गहकिलो हिस्सा दिन्छन् । जनकपुर चुरोट कारखाना विशेष सफल भएको छ। यो कारखाना नेपालभरिमा सबभन्दा लाभदायी भएको सबैले मानेका छन् । यसको उद्–घाटन वास्तवमा एक नयां औद्योगिक शाखाको सृजना थियो। अहिले देशको कुल चुरोट उत्पादनमा यसको हिस्सा ६० प्रतिशतभन्दा बढी छ। यो कारखाना सूर्ती खेतीमा लागेका हज्जारौं किसान–हरूको लागि निर्भरयोग्य बजार पनि भएको छ ।



# सोभियत–नेपाल : फलदायी सहयोग

ग. याकोभ्लेभ

"हाम्रा देशका सम्बन्धहरू ठूलो र सानो, उन्नत र विकासोन्मुख देशहरूबीचको, विभिन्न सामाजिक–राजनैतिक व्यवस्था भएका देशहरूबीचको मैत्रीको उदाहरण बन्न सक्छन् ।"

(मास्कोको भव्य क्रेमलिन प्रासादमा श्री ५ महाराजाधिराजबी रेन्द्र वीर विक्रम शाहदेवबाट दिइबक्सेको भाषणबाट)

विकासोन्मुख देशहरूसितको सम्बन्धमा सोभियत राज्यको आम विदेश नीति मार्ग तिनको स्वाधीन राष्ट्रिय अर्थव्यवस्थाको विकास निम्ति तिनलाई हरप्रकारले सहायता गर्नु हो । सोभियत कम्युनिस्ट पार्टीको २५ औं महाधिवेशनका निर्णयहरूले पुष्टि गरेको यही मार्गको अवलम्बन गर्दै, सोभियत संघ ती देशहरूलाई तिनको राष्ट्रिय स्वाधीनता र प्रभुसत्ताको अरू सुदृढीकरण, तिनको आर्थिक आत्म–निर्भरताको दिशामा लक्ष्यित प्रयासहरूलाई सर्वतोमुखी सहायता प्रदान गर्दछ ।

सोभियत–नेपाल सम्बन्ध, विशेषतः आर्थिक क्षेत्रको सम्बन्ध, यस्तो फलदायी सहयोगको स्पष्ट उदाहरण हो ।

नेपालका श्री ५ महाराजाधिराजको सम्मानमा आयोजित रात्रिभोजमा सोभियत राष्ट्रपति निकोलाई पोदगोर्नीले जोड दिंदै भन्नुभएको थियो, "हाम्रा दुइ देशको मैत्री र सहयोग निरन्तर बढिरहेछ । सोभियत–नेपाल सम्बन्धहरूको भविष्यलाई पनि पूर्ण आशावादी भएर हेर्ने आधार छन् । तिनको उत्तरोत्तर प्रगतिप्रति हाम्रो विश्वासको राम्रो पुष्टि भएको छ । सोभियत संघ र नेपालका सम्बन्धहरू समानता, प्रभुसत्ता र क्षेत्रीय अखण्डताको आदर, आन्तरिक मामिलामा अहस्तक्षेपका अडिग जगमा निर्माण गरिंदैछन् भने सोभियत–नेपाल मैत्रीको सबलीकरण हाम्रा दुइ जनताका पारस्परिक हित, बढी बलियो शान्ति र अन्तरराष्ट्रिय सहयोगको ध्येय अनुकूल छ ।"



रहनुका साथै यो कारखाना दैनिक कृषि कार्यमा कृषि मेशीनहरूको प्रचलनका लागि व्यापक कार्य गर्दछ । यही उद्देश्यलाई दृष्टिगत गरेर, कारखाना प्रबन्धकहरू कृषि मेशीनको संचालनमा किसानहरूका लागि तालीमको आयोजना गर्दछन् र नमूना कृषिशालाहरूको गठन गरेका छन् जहाँ कृषि मेशीन तथा औजारको गतिशील उपयोग गर्ने तरीकाहरू प्रदर्शन गरिन्छन् ।

उपरोक्त औद्योगिक संयन्त्रहरू र सोभियत नेपाल सहयोगबाट बनेका अन्य परियोजनाहरूले नेपालको आर्थिक निर्माणको प्रमुख कार्यहरूको संपादनमा निश्चय नै गहकिलो योगदान गर्दछन् । सार्वजनिक क्षेत्रका पहिला उद्यमहरू भएकाले ती हाम्रा जनताको मैत्रीका प्रतीक भएका छन् । यो मैत्री वर्षेनी झन् झन् सुदृढ हुंदै गइरहेछ ।

सोभियत संघ नेपालमा आएका प्रगतिशील परिवर्तनहरू र सोभियत संघसित समान सहयोग विकास गर्ने र त्यसलाई सबल बनाउने यसका नेताहरूको प्रयासलाई सहानुभूतिको दृष्टिले हेर्दछ ।

मास्कोमा सम्पन्न सोभियत–नेपाल वार्ताका परिणामहरूले यस उदात्त कार्यको सफल सम्पादनमा राम्रो योगदान गर्नेछन् भन्ने कुरामा कुनै शंका छैन। वार्ताको समयमा दुवै पक्षले आर्थिक लगायत विभिन्न क्षेत्रमा दुइ देशका सम्बन्धहरूको अवस्था र तिनका विकासका संभावनाहरूमाथि छलफल गरेका थिए । सोभियत संघको सरकार र श्री ५ को सरकार, बीच भएका वार्ताहरूको समाप्तिमा सम्पन्न आर्थिक तथा प्राविधिक सहयोग सम्बन्धी नयाँ संझौताले यो सहयोग सफल हुने विश्वास दिलाएको छ ।

बीरगंज चिनी कारखाना पनि सफलतापूर्वक अघि बढिरहेछ। यो सोभियत सहायताले बनाइएको नेपालको अर्को औद्योगिक उद्यम हो । यसका लागि प्राविधिक उपकरणहरू सोभियत संघ र चेकोस्लोभाकियाले प्रदान गरेका थिए । मीलको निर्माणको समयमा सोभियत र चेक विशेषज्ञहरूले नेपाली मजदूरहरूलाई तालीम गरे। कारखानासंगै ६०० हेक्टरको ऊखु बारी छ । यस अतिरिक्त कारखानानजीकैका गाउंहरूका हज्जारौं खेतहरूबाट ऊखु पाउँछ । किसानहरूलाई ऊखु खेतीमा प्रोत्साहित गर्न खरिद मूल्य नियमित रूपले बढाईंदैछ । यस आधारमा ऊखु पेल्ने कामलाई दिनको १५०० टनसम्म पुऱ्याइने छ, अर्थात यसमा ५० प्रतिशत वृद्धि गरिने छ । यसबाट देशमा चिनीको मांग पूरा हुनेछ ।

नेपाली अधिकारीहरूले समय समयमा औंल्याएका छन्, बीरगंज चिनी कारखाना राजकीय उद्यमले कत्तिको सफलतासाथ काम गर्न सक्छ र राष्ट्रिय अर्थव्यवस्थाको लागि यो कत्तिको लाभदायक हुन्छ, त्यसको राम्रो उदाहरण हो ।

**सोभियत संघको राजकीय यात्राको सिलसिलामा श्री ५ महाराजाधिराज सरकार ताशकन्दको लेनिन संग्रहालयमा सवारी होइबक्सियो ।**

**श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव सोभियत संघको राजकीय भ्रमणको सिलसिलामा उज्बेक समाजवादी गणराज्यको राजधानी ताशकन्द सवारी होइबक्सियो । चित्रमाः श्री ५ महाराजाधिराज सरकार ताशकन्दको लेनिन म्युजियम नजर गरीबक्सी बाहिर सव री होइबक्सँदै छ । चित्रमा सवारीसाथ जानुभएका अन्य नेपाली अतिथिहरू पनि देखिनुहुन्छ ।**

वीरगंजमा सोभियत सहायताद्वारा निर्मित अर्को उद्यम, कृषि औजार कारखाना नेपालको कृषि विकासमा महत्त्वपूर्ण भूमिका निर्वाह गरि-रहेछ । यो, यस किसिमको पहिलो कारखानाबारे विशेषज्ञहरूले अनुकूल मत व्यक्त गरेका छन् । उब्जा बढाउने प्रश्नहरूको समाधानमा प्रयत्नशील





श्री ५ महाराजाधिराज सरकार सोभियत संघको सफल राजकीय यात्रा पछि ताशकन्दबाट स्वदेशको निम्ति सवारी होइबक्सिँदैछ।

श्री ५ महाराजाधिराज सरकार स्वदेश फिर्ती सवारीको निम्ति ताशकन्द हवाइअड्डामा सवारी होइबक्सँदा मौसूफ सरकारको हार्दिक विदाइ दर्शनको निम्ति भेला भएका सोभियत नेताहरू। ↓



# सोभू

## सोभियत भूमि


**वर्ष १९, अंक २४, डिसेम्बर १९७६**
**मंसीर २०३३**

सोभियत संघको नेपालस्थित दूतावासको सूचना विभागद्वारा प्रकाशित पाक्षिक पत्रिका





यस अंकका लेख र फोटोका लागि हामी नोभोस्ती संवाद समितिको आभारी छौं।


मुखपृष्ठ:– श्री ५ महाराजाधिराज सरकार तथा सोभियत राष्ट्रपति निकोलाई पोद्गोर्नीबाट भ्नूकोभो हवाइअड्डामा सम्मान गारदको निरीक्षण।

पृष्ठावरण:– दाघेस्तान पहाडको एउटा गाउँ।


सम्पादक: स्तानिस्लाभ प. पाभिन्स्की
संयुक्त सम्पादक: शिवप्रसाद उपाध्याय
कलाकार: भ. निकोलायेभ


## यस अंकमा पढ्नोस्




स्तानिस्लाभ. प. पाभिन्स्कीद्वारा नेपालस्थित सोभियत संघको दूतावासको सूचना विभागको लागि नक्साल, चारढुङ्गे, काठमाडौंबाट प्रकाशित तथा जोरगणेश प्रेस (प्रा.) लि. बालाजु, काठमाडौंमा मुद्रित।

# सोभियत संघमा एक दिनको काम




**१९७५ मा सोभियत संघका सबै बिजुली घरहरूले एक दिनमा २८० करोड किलोवाट घन्टा बिजुली उत्पादन गरे । १९८० मा सोभियत संघका बिजुलीघरहरूले एक दिनमा ३७० करोड किलोवाट घन्टा उत्पादन गर्ने छन् ।**




**विगत पांच वर्षे योजना अवधिमा सोभियत कृषिले एकदिनमा झण्डै २५ करोड रूबल मूल्य बराबरको खाद्यवस्तु उत्पादन गऱ्यो । चालु पांच वर्षे योजना अवधिमा त्यो तथ्याङ्क बढेर झण्डै २९ करोड रूबल पुगेको छ।**




**१९७५ मा सोभियत धातुकर्मीहरूले एक दिनमा ३८७००० टन इस्पात उत्पादन गरे । १९८० मा दैनिक इस्पात उत्पादन झण्डै ५ लाख टन पुग्ने छ।**

विश्वको सबभन्दा ठूलो देश, सोभियत समाजवादी गणराज्य संघको क्षेत्रफल २ करोड २४ लाख वर्ग किलोमीटर छ। यसले धरतीको आबाद क्षेत्रको **६ भागको** एक भाग अथवा यूरेशियाली महादेशको **पाँच** भागको **दुइ भाग** भन्दा बढी ठाउँ ढाकेको छ ।

सोभियत संघको जनसंख्या २५ करोड ५० लाखभन्दा बढी छ। तसर्थ आबादीको दृष्टिले चीन र भारतपछि नै सोभियत संघको स्थान आउँछ ।

यस विशाल देशले एक औसत दिनमा के र कति उत्पादन गर्दछ ?

फेब्रुअरी–मार्च १९७६ मा प्रारंभ भएको चालु दशौं पाँच वर्षे योजना अवधिमा (१९७६–१९८०) सोभियत संघमा उत्पादन गरिने औद्योगिक उपजहरूको मूल्य १८० करोड रूबल बराबरको अथवा बितेको पाँच वर्षे अवधिमा भएको भन्दा ५० करोड रूबलले बढी हुनेछ। अतः नयाँ पाँच–वर्षे अवधिमा उपजको दृष्टिले औद्योगिक दिन झण्डै ४० प्रतिशतले बढेको छ ।

चौथो दशकको शुरूमा ३ महीनामा पूरै देशले जति उत्पादन गर्दथ्यो त्यत्ति उत्पादन गर्न सोभियत जनतालाई अहिले एक दिन मात्र लाग्दछ ।

विगत पाँच वर्षे योजना अवधि (१९७१–१९७५)–मा अत्यन्त प्रतिकूल जलवायु अवस्थाहरू हुँदाहुँदै पनि सोभियत कृषिले हरेक दिन करीब **२५ करोड मूल्यको** वस्तु उत्पादन गऱ्यो । चालु पाँच–वर्षे योजना अवधिमा अहिले नै यो अंक बढेर २९ **करोड रूबल** पुगि सकेको छ ।

निम्न तालिकामा केही कृषि उपजहरूको सोभियत संघको दैनिक उत्पादन दिइएको छ :

| कृषि उपजहरू | १९२४–१९२८ को बीचमा (प्रथम पाँच वर्षे योजना अवधिको अघि) | १९७१–७५ को बीचमा | नयां १० औं पांच वर्षे योजना अवधिमा (१९७६–१९८०) |
|---|---|---|---|




**दशौं पांच वर्षे योजना (३९७६–७८) अवधिमा सोभियत उद्योगले एक कार्य दिवसमा १८० करोड मूल्य बराबरको मालवस्तुहरू उत्पादन गर्ने छ ।**

| | | | |
|---|---|---|---|
| अन्न (हजार टनमा) | १६० | ४६७ | ५८८–६०२ |
| सूर्यमुखी ( ,, ) | ५.१ | १६.४ | २१ |
| सुकन्दर ( ,, ) | | | |
| (कारखाना प्रक्र्या | | | |
| करणको लागि) | २२ | २०८ | २६०–२६८ |
| कपास ( ,, ) | १.६ | २१ | २३ |
| **पशु उपजहरू** | | | |
| मासु (हजारटनमा) | | | |
| (काटिएको वजन) | १२ | ३८ | ४१–४३ |
| दूध ,, | ८० | २४० | २५७–२६३ |
| फुल (दश लाख गोटा) | २५.२ | १४१ | १५६–१६७ |

सोभियत संघका सबै इलाकाहरूमा राष्ट्रिय अर्थव्यवस्थाको विकासमा **एक दिनका** पूंजी लगानीहरू यसप्रकार छन् :

विगत नवौं पांच–वर्षे योजना अवधि (१९७१–७६)मा झण्डै २७ **करोड ५० लाख रूबल;**

चालु, दशौं पाँच–वर्षे योजना अवधि (१९७६–८०) मा– झण्डै **३४ करोड ५० लाख रूबल ।**

आठौं दशकको पहिलो आधामा सोभियत निर्माताहरूले हरेक दिन एउटा ठूलो राजकीय औद्योगिक कलकारखाना चालू गरे, त्यसमा स्यान स्याना उद्यम र कार्यशालाहरूको हिसाबै गरिएको छैन ।

यस अतिरिक्त सोभियत जनताले हरेक दिन ६००० भन्दा बढी सुव्यवस्थित फ्ल्याट पाए, अर्थात् हरेक दिन ३०,००० मानिस नयां फल्याटमा सरे ।

यस बखत गृह तथा सामूदायिक निर्माणको लागि हरेक दिन **५ करोड भन्दा बढी रूबल** निर्धारित गरिन्छ जुन कि १९७१–१९७५ मा गरिने खर्च भन्दा निकै बढी हो ।




**आठौं दशकको उत्तरार्धतिर सोभियत जनताले दिल्लौं ३ लाख वर्ग मीटरका आवास सुविधा पाउने छन् ।**

शक्ति उद्योगको अवस्था कस्तो छ नि ?

१९२८ मा, प्रथम सोभियत पाँच–वर्षे योजना अवधिको पहिलो वर्ष, सोभियत विद्युत् इन्जिनीयरहरू एक दिनमा १ करोड ४० लाख किलोवाट घण्टा बिजुली उत्पादन गर्दथे ।

आठौं पाँच वर्षे योजना अवधिको अन्तिम वर्ष (१९७०)मा दैनिक बिजुली उत्पादन २०० करोड किलोवाट घण्टाभन्दा बढी पुगेको थियो। अर्को शब्दमा, एक दिनको बिजुली उत्पादन जारशाही रूसमा एक वर्षमा सबै बिजुली केन्द्रहरूले गरेको उत्पादनभन्दा बढी थियो ।

अनि, अन्त्यमा, १९७५ मा २८० करोड किलोवाट घण्टा बिजुली उत्पादन गरियो।

१९८० मा सोभियत संघका बिजुली केन्द्रहरूको दैनिक बिजुली उत्पादन ३७० करोडदेखि ३८० करोड किलोवाट घण्टासम्म पुग्नेछ ।

**प्रथम पाँच वर्षे योजना** अवधि अघि (१९२८) सोभियत धातुकर्मी, तेलकर्मी र खानी मजदूरहरूले गर्ने दैनिक उत्पादन ९००० टन ढालिएको फलाम., १२००० टन इस्पात, ६००० टन तयार बेलित इस्पात, ३०,००० टनभन्दा बढी तेल र ८०,००० टनभन्दा बढी कोइला थियो ।

नयाँ, दशौं पांच वर्षे योजना अवधि अघि अर्थात् १९७५ मा सोभियत संघका औद्योगिक कलकारखानाहरूबाट भएको उत्पादनको परिमाण यस प्रकार थियो :

३,८७,००० टन इस्पात;

२,८२,००० टन ढालिएको फलाम

२,७०,००० टन तयार बेलित इस्पात

१३,४५,००० टन तेल र

झण्डै २०,००,००० टन कोइला ।

र १९८० मा सोभियत संघले दिल्लौं झण्डै ५,००,००० टन इस्पात; ३,००,००० टन भन्दा बढी तयार बेलित इस्पात; १७ लाखदेखि १८ लाख टनसम्म तेल; २२ लाख टन कोइला, र १०० करोड घन मीटर ग्यास उत्पादन गर्ने छ ।

१९८० मा सोभियत संघले दिल्लौं ४,००,००० टन सिमेन्ट र ४,००,००० टन रासायनिक मल उत्पादन गर्नेछ ।

र सोभियत परिवारलाई चाहिने टेबुल, वार्डरोब, फर्नीचर र सजावटका सामानहरूसहितका सोभियत जनताका नयां फ्ल्याटहरू उपलब्ध गर्ने औद्योगिक शाखाहरूको दैनिक उत्पादन के कति छ ? तुलनात्मक तथ्याङ्कका जिम्न लिखित तालिकाले हलुका र खाद्य उद्योगहरूले प्रति दिन कति उत्पादन गर्छन् भन्ने आभाष दिन्छन् :

**(बांकी १७ पातामा)**

# हेलसिन्की संझौता र वास्तविकता

## देतांत सहयोगको पूर्वानुमान गर्दछ

### (चौथो लेख)

–कोन्स्तान्तिन चेर्नेन्को

वैज्ञानिक तथा प्राविधिक क्रान्तिमा नित नयाँ राज्यहरू संलग्न भइरहेका छन् । उत्पादक शक्तिहरूको अरू द्रुततर विकास नै पृथ्वीको बढ्दो जनसंख्याको मंगलकल्याण निम्ति भौतिक आधार उपलब्ध गर्ने एक मात्र संभावना हुन आएको छ । र शान्ति वैज्ञानिक तथा प्राविधिक क्रान्तिको गतिलाई अरू बढाउन पूरा नगरी नहुने शर्त भएको । त्यसैले अन्तिम दस्तावेजका धाराहरूको कार्यान्वयन सोभियत संघको लागि पश्चिमका देशहरूसित व्यापार र आर्थिक सहयोगको विस्तार र सघनीकरणतिर लक्षित सुसंगत मार्गको अभिन्न अंग भएको छ । १९७१ देखि १९७६ को प्रारंभसम्ममा विकसित पूंजीवादी देशहरूसित सोभियत संघको व्यापारमा १७० प्रतिशतभन्दा बढी वृद्धि भयो । संघीय जर्मन गणराज्य, बेलायत, फ्रान्स, फिनल्याण्ड, इटाली र अष्ट्रिया जस्ता देशहरूसित सोभियत संघको व्यापार निकै बढेको छ ।

सोभियत संघ र संघीय जर्मन गणराज्यका आपसी सम्बन्धहरू व्यापारिक सहयोगलाई सजीव तुल्याउनमा देतांतको राजनैतिक हावापानी-को अनुकूल प्रभावको विशिष्ट उदाहरण बन्न सक्तछ । अगस्ट १२,१९७० को मास्को संझौताले भिडन्त र शीतयुद्धको अवधिलाई अन्त्य गरेपछि व्यापारमा र औद्योगिक तथा प्राविधिक सहयोगमा द्रुत वृद्धिको प्रवृत्ति देखिन थाल्यो । यताका वर्षमा संघीय जर्मन गणराज्य पूंजीवादी विश्वमा सोभियत संघको सबभन्दा ठूलो व्यापार साझेदार बन्यो, यससितको व्यापारावर्त १९७० यता चारगुना बढ्यो । विगत पांच वर्षमा त्यस अघिको २५ वर्षमा भन्दा बढी उपलब्धि हासिल गरिएको छ । मे, १९७३ मा बोनमा हस्ताक्षर गरिएको आर्थिक, औद्योगिक एवं प्राविधिक सहयोगको विकाससम्बन्धी १० वर्षे संझौता सफलतापूर्वक कार्यान्वियन गरिंदैछ । संघीय जर्मन गणराज्य र अरू विकसित पूंजीवादी देशहरूसित, व्यापक स्तरीय एवं दीर्घकालीन सहयोगमा सोभियत संघको प्रवेश मौलिक महत्त्वको कुरा हो । उदाहरणको लागि, पश्चिम जर्मनीका फर्महरूसितको सहभागिताद्वारा अहिले कुर्स्क नजीकै एउटा धातुशोधन संयन्त्र निर्माण गरिंदैछ (यसको पूर्ण क्षमता प्रतिवर्ष ५० लाख टन फलामसम्पन्न धूलो, ३५ लाख टन इस्पात र २७ लाख टन वेलित धातु हुनेछ) । संघीय जर्मन गणराज्यका साइमेन्स, एइजी–टेलिफुंकेन, हेक्टर, **बास्फ**, हेन्केल, कृप र डाइमलेर–बेन्ज जस्ता लगायत १३० भन्दा बढी फर्महरू सोभियत संघसित वैज्ञानिक एवं प्राविधिक सहयोगमा संलग्न भएका छन् ।

संघीय जर्मन गणराज्यका विशेषज्ञहरू अनुसार, सोभियत संघसित यसको व्यापारको वर्तमान स्तरले पश्चिम जर्मनीको लगभग १,४०,००० कारखाना अफिस कामदारहरूलाई काम उपलब्ध गर्दछ । तिनका लागि सोभियत–पश्चिम जर्मन सहयोगको विस्तार निकै गहकिलो र ठोस कुरा भएको छ । सहयोग वर्षेपिच्छे बढ्दै छ, र त्यसको नयाँ रूपहरू देखापरिरहेका छन्, र यो सब देतांतका अवस्थाहरूमा मात्र संभव भएका हुन् । उदाहरणको लागि नवौं दशकको पुस्ताको नयाँ प्रकारको खराजको विकासका लागि सोभियत संघ र पश्चिम जर्मन डिजाइनरहरूको एक संयुक्त टोलीले सफलतापूर्वक काम थालिसकेको छ । संयुक्त खोजहरूले दुवै पक्षका खर्चहरू घटाउंछन् र समय बचाउँछन् ।

देतांत र परस्पर विश्वासमा बृद्धिले गर्दा आगामी २०–२५ वर्षको निम्ति परिकल्पित बहुपक्षीय व्यापक–स्तरीय परियोजनाहरू संभव भएका छन् । "तेहरान कबुलियत" यसको एउटा उदाहरण हो । यस अन्तर्गत दक्षिणी इरानमबाट संघीय जर्मन गणराज्य, फ्रान्स र अष्ट्रियालाई सोभियत संघ र चेकोस्लोभाकियाको इलाका भएर ग्यांस आपूर्ति गरिने छ । यो परियोजनाले कुल ५५०० किलोमीटर लामो पाइपलाइन प्रणालीको निर्माण र सन् २००३ सम्ममा ग्यांसको आपूर्तिको परिकल्पना गरेको छ ।

हेलसिन्की भावनामा काम गर्दै, सोभियत संघ द्विपक्षीय र बहुपक्षीय आधारमा आफ्नो व्यापार, र वैज्ञानिक तथा प्राविधिक सहयोग व्यापक र गहन बनाइरहेछ । यस्ता सहयोगका असीम संभावनाहरू छन् भन्ने तथ्यबाट हामी अघि बढेका छौं । यसबारे लि. इ. ब्रेझनेभले बरोबर उल्लेख गर्नुभएको छ । उहांले पर्यावरणको संरक्षण, यातायात र ऊर्जाविज्ञानको विकासको क्षेत्रमा सहयोगका प्रश्नहरूलाई लिएर अखिल–यूरोपेली अधिवेशन वा सम्मेलनहरू आयोजना गर्ने सुझाव दिनुभएको छ । यस विचारले बढ्दो अन्तरराष्ट्रिय मान्यता पाइरहेछ र धेरै देशमा ठूलो रुचि उत्पन्न गरेको छ । यूरोपका लागि राष्ट्र संघीय आर्थिक आयोगको हालैको बैठकमा यस प्रस्तावको कार्यान्वियनका लागि व्यावहारिक उपाय र साधन पैल्याउने हेतुले यस प्रस्तावको अध्ययन जारी राख्ने निर्णय लिइएको थियो ।

हेलसिन्की सम्मेलनपछिको अवधिमा यूरोपका क्षेत्रीय संगठनहरू बीच सहयोग विस्तारको क्षेत्रमा महत्त्वपूर्ण घटनाहरू भएका छन् ।

फेब्रुअरी १६,१९७६ मा जर्मन जनवादी गणराज्यको मन्त्रिपरिषद्का उपाध्यक्ष तथा पारस्परिक आर्थिक सहायता परिषद्को कार्य-कारिणी समितिका अध्यक्ष गेर्हार्ड वीसले लक्षेम-बर्गका प्रधानमन्त्री र यूरोपेली आर्थिक समुदायको मन्त्रिपरिषद्का अध्यक्ष ग्यास्टोन थर्मलाई यूरोपेली आर्थिक समुदायसित औपचारिक सम्बन्ध स्थापना गर्ने पारस्परिक आर्थिक सहायता परिषदको प्रस्ताव, र दुइ संगठनहरूको पारस्परिक सम्बध आधारित हुनुपर्ने सिद्धान्तहरूको मस्यौदा पनि हस्तान्तरित गर्नुभयो । संझौताको यो मस्यौदाको

अभिप्राय पश्चिममा शीतयुद्धको समयदेखि रहिआएको कृत्तिम छेकबारहरू र भेदभावपूर्ण सीमाहरूको उन्मूलन गर्नु, र तिनीहरूबीच र दुइ संगठनका देशहरूबीच समान, परस्पर लाभदायी सहयोगका लागि अनुकूल अवस्थाहरू सृजना गर्नु हो ।

पारस्परिक आर्थिक सहायता परिषद्को यो अग्रसरता यूरोपेली महादेशमा स्वस्थ्य वातावरणको सृजना निम्ति समाजवादी देशहरूको नयाँ योगदान हो । यूरोपका जनतालाई व्यापारको बृद्धि, परस्पर लाभदायक सम्बन्धहरू, व्यापारिक सम्बन्ध आदिको विकासमा रुचि छ र यो उनीहरू महादेशका दुइ सबभन्दा ठूला आर्थिक संगठनहरूको बीचमा पनि होस् भन्ने चाहन्छन् । पारस्परिक आर्थिक सहायता परिषद् यस्तो सहयोगको निम्ति र स्तरीकरण, पर्यावरणको संरक्षण, आर्थिक भविष्यवाणी, सूचनाको आदान- प्रदान, सामयिक प्रश्नहरूको संयुक्त अध्ययन आदिका समाधानमा पनि सहयोग कायम गर्न तत्पर छ । निम्नलिखित तथ्याङकबाट यस्तो सहयोगको संभावना रहेको स्पष्ट छ : पारस्परिक आर्थिक सहायता परिषद्का सदस्य देशहरू र यूरोपेली आर्थिक समुदायका सहभागीहरूबीचको व्यापार १९७० देखि १९७५ सम्ममा तीन गुना बढ्यो । अतः पारस्परिक आर्थिक सहायता परिषद्ले प्रस्तुत गरेको सहयोगको निम्ति अनुकूल अवस्थाहरू सृजना गर्ने संझौताको प्रस्ताव दुबै संगठनहरूको हित अनुरूप छ ।

पूंजीवादी देशहरूसित विदेश व्यापार र र आर्थिक सहायताको दीर्घकालीन योजना गर्नु सोभियत संघको र त्यस्तै अरू समाजवादी देशहरूको विशिष्टता नै हो । यो काम २५ औं पार्टी महाधिवेशनले पारित गरेको १९७६–१९८० को लागि सोभियत संघको राष्ट्रिय अर्थव्यवस्थाको विकासका लागि निर्देशनहरूमा निश्चित गरिएको छ अन्तरराष्ट्रिय आर्थिक, वैज्ञानिक तथा प्रौद्योगिक सहयोगको विस्तार र सघनीकरणको दिशामा, पर्यावरणको संरक्षण र अन्य क्षेत्रमा सहयोगको दिशामा लक्षियत, यूरोपेली सुरक्षा एवं सहयोग सम्मेलनको अन्तिम दस्तावेजका व्यवस्थाहरूको परिपूर्तिको लागि आवश्यक कार्यहरू गरिने छन् । "महाधिवेशनले ऊर्जा एवं कच्चा पदार्थ समस्याहरूको समाधानमा, अति व्यापक तथा डरलाग्दा रोगहरूको उन्मूलनमा, पर्यावरणको संरक्षण, अन्तरिक्ष अनुसन्धानमा, विश्व महासागरका स्रोतहरूको उपयोगमा सक्रिय सहयोग गर्ने सोभियत संघको तत्परतामाथि जोड दियो ।

व्यापारिक, आर्थिक, वैज्ञानिक तथा प्रौद्योगिक सहयोगको विद्यमान अनुभव र उपलब्धिको आधारमा सोभियत संघले यस मार्गमा अरू अघि बढ्नुपर्दछ भन्ने सुझाव राखेको छ । यो यूरोपमा सकारात्मक राजनैतिक परिवर्तनको लागि आर्थिक जग लगाउने देतांतलाई साकार बनाउने मुख्य दिशाहरूमध्ये एउटा हो ।

---

(१५ पाताको बांकी)

| | १९२८ | १९४० | १९५० | १९६० | १९७० | १९७५ |
|---|---|---|---|---|---|---|
| **क. हलुका उद्योग उपज** | | | | | | |
| १. सबै किसिमका कपडा (एक लाख वर्ग मीटरमा) | ६० | ६१ | ६२ | १८१ | २४३ | २७३ |
| २. छालाका जुत्ता (एक हजार जोर) | १५६ | ५८० | ५५६ | ११४६ | १८६० | १९१३ |
| ३. बुनिएका कपडा (भित्री र बाहिरी लुगाहरू) (एक हजार थान) | २३ | ५०८ | ५४१ | १५९४ | ३३६६ | ३८८२ |
| **ख. खाद्य उद्योगका उपज** | | | | | | |
| ४. दानादार चिनी (एक हजार टनमा) | ३.५ | ५.९ | ६.९ | १७.४ | २८.० | २८.५ |
| ५. बट्टाबन्द खाद्य पदार्थ (एक लाख सर्वप्रचलित आकारको बट्टामा | ३ | ३१ | ४२ | १३३ | २९३ | ३९७ |

घरको कामलाई सघाउ पुऱ्याउने वस्तुहरूको दैनिक उत्पादन खास गरेर तीव्र गतिमा बढिरहेछ ।

निम्न तालिकाले सोभियत संघमा मनोरञ्जनसम्बन्धी तथा घरायसी वस्तुहरूको दैनिक उत्पादनको कुल मूल्य देखाउँछ :

१९६० मा : झण्डै १ करोड ३० लाख रूबल

१९६५ मा : २ करोड रूबल

१९७० मा : करीब ४ करोड रूबल

१९७५ मा : ६ करोडभन्दा बढी रूबल

१९८० मा : झण्डै १० करोड पुग्ने छ ।

१९६० मा, उदाहरणको लागि, सोभियत संघमा प्रतिदिन **३० लाख रूबल** मूल्यको फर्नीचर तयार हुन्थे भने १९७५ मा दैनिक उत्पादनको मूल्य झण्डै १ करोड २० लाख रूबल पुगिसकेको थियो ।

सोभियत भारी उद्योगले बनाएका उपभोगका वस्तुहरूको दैनिक उत्पादनको वृद्धि यस्तो देखिन्छ :

| | १९४० | १९६५ | १९८० | १९७५ |
|---|---|---|---|---|
| भित्तेघडी र नाडी घडीहरू (हजारमा) | ७.६ | ८४ | ११० | १५१ |
| घरेलु रेफ्रिजरेटर (हजारमा) | ०.०१ | ४.६ | ११ | १५ |
| टेलीभिजन (हजारमा) | ०.००१ | १० | १८ | १९ |
| रेडियो र रेडियोग्राम (हजारमा) | ०.५ | १४ | २१ | २३ |

यी सबै तथ्याङ्कहरूले के देखाउँछन् भने सोभियतहरूको देशको हरेक दिनको शान्तिपूर्ण सिर्जनात्मक श्रमले सोभियत योजनाहरूको परिपूर्तिको लागि, समाजवादी जीवन पद्धतिको विकासको लागि, देशमा साम्यवादको भौतिक तथा प्राविधिक आधारको सिर्जनाको लागि, सोभियत जनताको जीवनस्तर सुधार्न र विश्वका सबै देशहरूसित सोभियत संघको सहयोगको विस्तारको निम्ति झन् झन् बढ्दो योगदान गरिरहेछ ।



चिर्केइस्क जलबिजुली घरको निर्माण अहिले जोडतोडका स थ चलिरहेछ ।

# दाघेस्तानका निधिहरू

–यूनिश स्भेत्लानोभा

दाघेस्तान स्वशासित सोभियत समाजवादी गणराज्य रूसी सोभियत संघीय सभाजवादी गणराज्यको एक भाग हो। दाघेस्तान १९२० मा स्वशासित घोषणा गरिएको थियो । यसको क्षेत्रफल ५०००० वर्ग किलोमीटरभन्दा बढी र जनसंख्या १५,००,००० छ ।



यस अधिष्ठापनले तेरेक नदीको पानी शुद्ध गर्दछ।

चराका गुंडहरू झैं ठाडा भीरहरूमा रहस्यमय ढंगले थपक्क बसेका मनोरम गाउंहरूलाई गहिरा खोंच र नागबेली खोलाहरूले छुट्याएका छन् । यही हो **पहाडहरूको देश** स्थानीय भाषामा दाघेस्तानको अर्थ यही हुन्छ (दाघ = पहाड, स्तान = देश)। यो उच्चभूमि हो–पहाडहरू यसको भूदृश्य मात्र हैनन्, जमीन पनि हुन् जहाँ मानिस बस्छन् र काम गर्दछन् ।

कविहरू दाघेस्तानलाई "भाषाहरूको पहाड" भन्दछन् । वैज्ञानिकहरू यसलाई "विश्वको नृवंशीय संग्रहालय" भन्दछन्; यहाँ ३३ राष्ट्रियताका मानिसहरूको बसोबास छ ।

"कुशल शिल्पीहरूको देश" दाघेस्तानको अर्को नाम हो। यहां शस्त्रनिर्माताहरू, कामी,सार्की, तमौट, कुमाले वा जुलाहाका गाउँहरू छन् । ती गाउँहरूको नाउँ पनि त्यसै हिसाबले रहेको छ।

त्यस्तै दाघेस्तानमा कला शिल्पीहरूका गाउँहरू छन् र हरेक गाउं आफ्नो अद्वितीय शिल्पको लगि प्रख्यात छ । कुबाची गाउंलाई नै लिन सकिन्छ। सुन र चांदीको मिहिन कामका लागि यसले अनेकौं अन्तरराष्ट्रिय पुरस्कारहरू पाइसकेको छ । यहांका सुनारहरू एक ग्राम सुनको....तीन किलोमीटर लामो धागो बनाउन सक्छन् । हाड, धातु र काठमा सुन र चाँदीले जडिएका बुट्टाहरूका लागि कुबाची अतुलनीय छ ।

उन्तसुकुल गाउं शताब्दीयौंदेखि कलात्मक काष्ठकार्यको निम्ति प्रख्यात छ। अक्टोबर क्रान्तिका नेता लेनिनलाई एउटा खुर्पानीको रूखको फेद कुँदेर र जर्मन सिल्भरको बुट्टा जडेर बनाइएको मसीदानी उपहार दिने गाउँ यही थियो ।

"घाम र सागरको देश" दाघेस्तानको अझ अर्को नाउँ हो । न्यानो क्यास्पियन सागर यसको यातायात मार्ग र मत्स्य उपजको स्रोत हो । उपत्यकाहरूमा पहारिलो घाममा उच्च कोटीका अंगूरहरू पाक्दछन् ।

लैला अलिएभा दाघेस्तान सोभियत समाजवादी गणराज्यको गीत तथा नृत्य कम्पनीको सदस्या हुन् ।



दाघेस्तानको कुबाची गाउँका कालीगढहरूले बनाएका सुन तथा चाँदीका वस्तुहरूले प्रमुख अन्तरराष्ट्रिय मेलाहरूमा डिप्लोमा र सम्मान पत्रहरू पाउँदै आएका छन् ।



एउटा पहाडी चरनमा ।

दाघेस्तान "कविहरूको देश" पनि हो । रसूल हमजातोभका किताब र गीतहरू धेरै देशमा विख्यात छन् । "दाघेस्तानमा तीन निधि छन्——पहाड, सागर र अरू सबै कुराहरू" । यी शब्दहरू हमजातोभकै हुन् ।

"अरू सबै कुराहरू..." वास्तवमा यो सानो स्वशासित गणराज्यका संपूर्ण निधिहरूको गणना गर्न असंभव छ, तर पनि मुख्य निधिको उल्लेख गर्न चाहन्छु । त्यो हो सृजनात्मक कामप्रतिको यसको युगौं पुरानो झुकाव । अहिले यो झुकाव यसको जीवनको, यसका सुधारहरूको निम्ति सामाजिक क्रियाकलापहरूद्वारा अरू बढेको छ ।

## नयाँ जीवनको सिंढी

पचास वर्षअघि अहिले "अग्नि" नाउंको सानो शहर भएको ठाउंलाई जादूले भरिएको ठाउँ मानिन्थ्यो। यसमा आश्चर्यको कुरा पनि छैन। ज्यादै अग्लो पहाडमा बसेको गाउंका गाउंलेहरू झ्यालको काम दिने गारोमा भएको सानो प्वालबाट कता हो कता तल, पहाडको फेदीमा दिनरात बलिरहने विचित्रको ज्वाला देख्दथे ।

सोभियत संघ र यूरोपमा कांचको पहिलो यन्त्रीकृत उत्पादन "अग्नि" मा थालिएको थियो, र कांचको उत्पादनका लागि भट्टीहरूलाई प्राकृतिक ग्यांस उपयोग गरेर तताउने प्रश्नको समाधान गरिएको थियो ।

"अब तपाईंहरूको 'अग्नि' राम्ररी बल्न थालेको छ, यसलाई कहिल्यै निभ्न नदिनु होला !" "दाघेस्तान अग्नि" का मजदूरहरूलाई तत्कालीन सोभियत राष्ट्राध्यक्ष मिखाइल इभानोभिच कालिनिनले यसै भन्नुभएको थियो। यो कुरा मलाई ऐना काटने शिल्पी हिबी महमदोभले बताउनु भएको हो । सरकारी बधाई सन्देशमा यस कारखानालाई दाघेस्तानको उद्योगको पहिलो बीज भनिएको थियो।

वृद्ध नसरूल्लायेभले उहांको लामो जीवन धुवांले भरिएको छाप्रो (**साकलिया**) मै बिताउनु भएको थियो। उहांले १९४१ मा आफ्नो जेठो



**माथि दाहिनेः– (पहिलो) निर्माताको पेशा दाघेस्तानका तन्नेरीहरूमा निकै लोकप्रिय छ।**

**(दोस्रो) दाघेस्तानको बुइकान्स्की जिल्लामा पर्ने माकारोभ्स्की राजकीय कृषिशालामा हिउँदे बाली काटिंदैछ ।**

**दाघेस्तानको पहाडी नदीहरूमा ठूला-ठूला जलाशयहरूको निर्माण गरिंदैछ, जहाँको पानीले कैयन हेक्टर सुख्खा जमीनको सिंचाई गर्न सम्भव हुने छ।**

गुनिब गाउँ पहाड माथि अवस्थित छ।





छोरो अलीलाई जर्मन फासिस्टहरूविरुद्ध लडन विदा गर्नुभयो अली, फेरि फर्किएनन् । उहांको कान्छो छोरो गेबेक पनि दाजुको मृत्युको बदला लिन मोर्चामा जान चाहन्थे तर १४ वर्षका मात्र भएकाले उनलाई सेनामा लिइएन । त्यसै बेला उपत्यकामा नि नत कांच कारखानाका सबै लोग्नेमानिसहरू लडाइंमा गएका छन् र त्यहां काम गर्ने मानिसको खांचो छ भन्ने सुनेर भेडापालकका छोरा गेबेक नस्रुल्लायेभ उपत्यकामा झरे र अपरिचित नयाँ ोवनमा प्रवेश गरे ।

कारखानामा, अरू सयौं नयां मजदूरहरूले जस्तै, गेबेकले पनि अध्ययन गर्न थाले ।

कारखानाले कैयौं कुशल शिल्पीहरू प्रशिक्षित गऱ्यो । नयां ज्यासलहरूका साथसाथै राम्रा आवास घरहरू बने । रूत र सोभियत संघका



माखाचाक्लामा लेनिन चोक ।

अरू गणराज्यहरूबाट मजदूरहरू यहां काम गर्न आए ।

तर आफ्नो पहाडसित छुट्टिनु त्यत्ति सजिलो भएन । उपत्यकाको जीवन अवस्था निःसन्देह बढी राम्रो थियो तापनि धेरै बूढापाकाहरू भन्थे, "तलको राम्रो अगेनुभन्दा पहाडको धुंवा लाग्ने चुल्हो नै बढी बेस् !" मानिसहरूलाई तल मैदानमा सार्ने काम एक मानवीय काम थियो र राज्यले त्यसमा ठूलो रकम लगायो, तर मनोवैज्ञानिक समस्याको रूपमा यो आज पनि चानचुने छैन । युगौंदेखिका परम्पराहरू बलिया हुन्छन् । हो, समय तिनमाथि बिस्तार बिस्तार बिजयी बन्दैछ । दाघेस्तानका अभार र कुमीक, ताबासारान र लाकहरू बढ्दो संख्यामा "अग्नि" तिर ओइरिरहेछन्, जहां उनीहरू शिक्षा र रोचक पेशा पाउन सक्छन् । तिनको कार्यगत मैत्री बढदै छ । पुराना मजदूरहरू सगौरव घोषणा गर्दछन्, "हाम्रो कारखाना एक सानो दाघेस्तान हो ।" यी पुराना मजदूरहरूमा अहिले गेबेक नस्रुल्लायेभ पनि छन् । उनी देशका अत्यन्तै कुशल काँच निर्माताहरूमध्ये एक भइसकेका छन् । उनी त्यो कलाको शिखरमा एक एक खुडकिलो गर्दै चढेका थिए र अहिले समाजवादी श्रम वीरको उपाधिले विभूषित छन् ।

कारखानाले ५० औं जयन्ती मनाइसकेको छ । वर्षको दश लाख वर्ग मीटर झ्यालका ऐनाहरू बनाउने यो कारखाना उद्योगका कैयौं शाखाहरूलाई अत्यन्तै आवश्यक "सिलिकेटका ढीक्काहरू" को सबभन्दा ठूलो आपूर्तिकर्ता हो । कारखाना अति मिहिन रेशाहरू–र घरेलु रेफ्रिजरेटरका लागि इन्सुलेशन सामग्री, आधुनिक रिर्माण सामग्री, कांच प्रोफिलाइट र सजावटी टाइलहरू पनि बनाउँछ ।

गेबेक नस्रुल्लायेभ भन्छन्, "मेरो कारखानाले देशका विभिन्न भागमा आगो बालेको छ ।" कुरा के भने "दाघेस्तान अग्नि" का पारखी शिल्पीहरूले सोभियत संघका अरू गणराज्यहरूमा कांच उत्पादनको गठन गर्न धेरैदेखि सहायता गर्दै आएका छन् ।

के गेबेक नस्रुल्लायेभलाई आफ्नो पहाडको घरको संझनाले अझै पिरोल्छ ?

'कारखानासित सम्बन्धित सारा कुरा मलाई मेरो घरको अगेनुको धुवा जत्तिकै प्यारो र मूल्यवान छ," उनी भन्छन् ।

## चिर्केंइका बस्तीहरू

चिर्केंइ जलबिजुली घर सुलाक नदीमा बनाइएको छ । यो नदीमा १२००० वर्ग किलोमीटर



**दाघेस्तानको गीत तथा नृत्य कम्पनीका सदस्यहरू पहाडी गाउँ तथा भेडापालकहरूका शिविरहरूमा अक्सर आपना नृत्य कार्यक्रम प्रस्तुत गर्दछन् । चित्रमा:– यस कम्पनीका नर्तक– नर्तकी– शाभलुख इबादल्लाएभ र जिना इब्रागिमोभा एउटा पहाडी गाउंमा आपना नृत्य कार्यक्रम प्रस्तुत गरिरहेका ।**

क्षेत्रका सबै नदीनाला, खोला- खहरेहरू खस्दछन्। प्रचण्ड वेगले बग्ने यो नदीले सालागाउं पर्वत मालालाई काटेर झण्डै दुइ किलोमीटर गहिरो खोंच बनाएको छ। चिर्केइ गाउँ यही खोंचको ठाडो ढुङ्गे भीरमा बसेको छ। र ठाडा भीरहरूलाई जोडने ९० तला अग्लो शक्तिशाली बांध पनि यहीं बनाइएको छ।

सुलाक नदीको औद्योगीकरण वास्तवमा दाघेस्तानमा सोभियत सत्ताका प्रारंभिक वर्षहरूमा शुरू भयो। जगदेखि नै आफ्नो राष्ट्रिय अर्थव्यवस्था निर्माण थाल्नुपरेको त्यस नवजात गणराज्यले त्यस बखत कैयौं जरूरी प्रश्नहरूको समाधान गर्नुपरेको थियो। सबभन्दा जरूरी र निर्णायक काम सिंचाइको व्यवस्था थियो। पानी भनेको जीवन हो, यहांका गरीब बासिन्दाहरूले पटक पटक सशस्त्र विद्रोह गरिसकेका थिए किनकि सिंचाइका नहरहरू निजी स्वामित्वमा थिए। पर्वत निवासीहरू १९२१ मा लेनिनले उनीहरूलाई सम्बोधन गरेर भन्नुभएका शब्दहरू अत्यन्तै कृतज्ञतापूर्वक संझना गर्दछन् : "जमीनको रूपान्तरण गर्न यसलाई पुनर्जिवित गर्न र अतीतलाई पुर्न र यसरी समाजवादमा संक्रमणलाई बल दिन सिंचाइ सबभन्दा आवश्यक र सबभन्दा उपयुक्त कुरा हो।"

त्यस वर्ष दाघेस्तानीहरूले एउटा ठूलो सिँंचाइ नहरको निर्माण शुरू गरे। दुइ वर्षपछि नै सुलाक नदीको पानी माखाच्कालासम्म बग्न थाल्यो : अगम्य पहाडहरूको बीचबाट ७५ किलोमीटर लामो नहर खनिएको थियो। निर्माण कार्यमा सबै गाउंहरूले भाग लिएका थिए। झण्डाहरू बोकेर गीत गाउंदै गाउंलेहरू आफ्नो स्वाधीन प्रारब्धको निर्माण गर्न जान्थे। त्यस बखतका फोटोहरू हेर्दा अहिले हामी छक्क पर्छौं, झुत्रेझाम्रे लुगा लगाएका हज्जारौं मानिसहरू कोदालो र पीकले ढुङ्गाजस्तो साह्रो जमीन खनिरहेका छन्...यो सोभियत संघको पहिलो सबभन्दा ठूलो अखिल राष्ट्रिय निर्माण स्थल थियो। यसका लागि गणराज्यलाई श्रमको **लाल पताका** पदक प्रदान गरियो र अक्टोबर क्रान्तिको संझनामा नहरको नामकरण गरियो।

सुलाक नदीमा फेरि एक पटक अखिल–राष्ट्रिय परियोजना प्रारंभ भयो।

"दाघेस्तान अग्नि' कारखाना जस्तै, चिर्केइ जलबिजुली घरको निर्माण सोभियत संघका ४० राष्ट्रियताका मानिसहरूले गरे––दाघेस्तानको प्राचीन भूमिमा हजारौं मानिस भएको बहुभाषी निर्माण टोलीले नयाँ जीवनको निर्माण गर्न थाल्यो। यसमा अरू जलविजुली घरका ख्याति-प्राप्त निर्माताहरू पनि थिए। उनीहरूले आफ्नो पुराना गाउंहरू छाडेर जलविजुली घरमा आएर ड्रिलर, ब्लाष्टर, जडान कर्मी, कंक्रिट मजदूर र मेशीन चालकको काम सिकेका मानिसहरूसित कांधमा कांध मिलाएर काम गरे।

चिर्केइ बिजुलीघरको लागि उच्च पहाडी बांध बनाइरहिएको अतल खोंचको रिंगटा लाग्ने भीरमा उभिएको म कहिल्यै बिर्सिने छैन। बूढापाकाहरूले मलाई त्यस पहाडबाट गाउंका छाप्राहरू कसरी तासका घर झैं तल खसेका थिए भन्ने बताएको थिए। त्यहाँ भैंचालो गएको थियो। योभन्दा भयानक कुरा अरू के हुन सक्थ्यो होला ! विगत दशकमा मात्र दाघेस्तानमा कैयौं भैंचालोहरू गए तर हरेक पटक नै जनताको प्रयासद्वारा प्राकृतिक प्रकोपलाई पराजित गरियो। दाघेस्तानमा विनाशकारी कम्पहरू अनुभव हुन थाल्नसाथै, त्यहाँ सहायता गर्न चाहनेहरूका कैयौं तार-खबर आउन थाले। देशको हरेक कुनाबाट निर्माण सामग्री, खाद्य वस्तु र मेशीनहरूको भारी आए। शहर र गाउंमा यथाशीघ्र सामान्य जीवनको पुनर्स्थापनाको लागि हजारौं स्वयंसेवकहरू––इंजिनीयर, डाक्टर र निर्माताहरू––आइपुगे। १९७० को वसन्तको भैंचालोको नक्शामा गणतन्त्र का ठूलो जिलालाई ठाउं ठाउंमा कालावृत्तहरूले घेरिएको छ। यी घरहरू भत्किएका ठाउँ हुन्। बाइस गाउं ध्वस्त भए र हज्जारौं मानिस घरबार विहिन भए। अर्को नक्शामा दाघेस्तानबाट मानौं सूर्यका किरणहरू फैलिएका देखिन्छन्––यी सोभियत संघका हरेक भागबाट दाघेस्तानसम्म आएका सहायताका रेखाहरू हुन्। अहा ! प्रेम र सरोकारको कस्तो सुन्दर ज्यामिति !

जनतालाई अरू घटनाको पनि संझना छ। त्यस बखत दाघेस्तान जारशाहीको उपनिवेश थियो। एउटा भैंचालोले ३६ गाउं ध्वस्त पार्‍यो। सैनिक बडाहाकिमले यसबारे माथिल्ला अधिकारी-हरूलाई खबर गरेर सहायता मागे। चार महीना बितेपछि बल्ल जवाफ आयो : साधन नभएकोले सहायता दिन नसकिने कुरा उल्लेख गरिएको थियो। "मानिस र भगवान कसैबाट पनि सहायता पाइएन", मानिसहरू भन्न थाले।

म चिर्केइ जांदा यो गाउं मानवनिर्मित सागरमा डुबिसकेको थिएन, बूढापाकाहरू आफ्ना बाबु बाजेको साकलियाहरू छाडेर नजीकै निर्मित नयां चिर्केइका राम्रा घरहरूमा सर्दै थिए। यसरी छाडिएको एउटा साकलियामा मैले बोसो भरिएको कांसको दीयो देखेको थिएं। अहिले दश लाख किलोवाट क्षमताको जलविजुली घर नै चिर्केइको बत्ती भएको छ। यो शक्ति उत्तरी ककेशियाका छिमेकी जिल्लाहरूको लागि पनि पर्याप्त पुग्छ। इंजिनीयरिंगको दृष्टिले यो वृत्ताकार बाँध सोभियत र विश्व व्यवहार दुवैमा अनुपम छ। यी क्षेत्रहरूको लागि नयां जलबिजुली घरको अर्को गुण पनि छ: सबै संरचनाहरू बलियो फ्रेममा जोडिएका छन्। यसले गर्दा भैंचालो जांदा यी भत्किन्नन्।

जलबिजुली घरका निर्माताहरूको मुख्य टुकडी फेरि निर्माणको बाटोमा लागेको छ। निर्माण टोलीका नेता महमद–जापिर गेरेयेभ भन्छन्: "हामी सुलाक नदीमा आगामी दश–पन्ध्र वर्षमा निर्माण गर्ने योजना गरिएको बिजुली-घरहरूको श्रृंखलाको अर्को जोर्नी इर्गानाइ जलबिजुली घरको निर्माण गर्दैछौं। यो चिर्केइभन्दा सरल छ तापनि यसका आफ्नै कठिनाइहरू छन्। यहाँ हामीले पहाड खोपेर पांच किलोमीटर लामो सुरूङ्ग बनाउनुपर्ने छ, पहाडको उँचाइमा सडक बनाउनुपर्ने छ।"

सुलाक जलबिजुलीघर श्रृंखलालाई आवश्यक सामग्री उपलब्ध गर्न नयां कारखानाहरू बनिरहेछन्। यी सब गणराज्यका क्षेत्रीय उत्पादन उद्यमसमूहको योजनाबद्ध निर्माणको आधार बन्नेछन्। 

# बिदाइ १९७६

बिल्न लागेको वर्षलाई बिदा दिदा, हाम्रो मनमा एउटा स्वाभाविक प्रश्न उठ्छ: यसले हामीलाई के दियो र हामीले यसलाई के दियौं ? गत बसन्तमा आयोजित सोभियत कम्युनिस्ट पार्टीको २५ औं महाधिवेशनले हामी अघि बढिरहेको तथ्यलाई अत्यन्तै स्पष्टताका साथ र विश्वसनीय ढंगले देखायो। महाधिवेशनले हामीले विगत पांच वर्षमा गरेका कामका परिणामहरूको लेखाजोखा मात्र गरेन, नयाँ पांच–वर्षे अवधिका लागि सृजनात्मक प्रयासको व्यापक कार्यक्रम पनि स्वीकृत गऱ्यो । हामी घरहरू र मानव श्रमलाई सहज बनाउन सघाउने परियोजनाहरूको बढ्दो दृढतासाथ निर्माण गरिरहेछौं यसका, लागि प्रतिदिन ५ करोड भन्दा बढी रूबल खर्च गरिन्छ र प्रत्येक दिन सोभियत जनता ६००० नयाँ फ्ल्याट पाउँछन् । आजकाल शक्ति इंजिनीयरिंगले प्राविधिक प्रगतिको गति निर्धारण गर्दछ । हाम्रो शक्ति इंजिनीयरिंगको गति विश्वका सर्वाधिकहरू-मध्येमा पर्दछ । पोहोर हामीले प्रत्येक दिन ३ अर्ब किलोवाट घण्टा बिजुली उत्पादन गऱ्यौं । यति बिजुली उत्पादन गर्न बेलायतलाई चार दिन र फ्रान्सलाई ६ दिन लाग्छ । अनि यो प्रगति त्यस देशले गरेको हो जसलाई प्रसिद्ध अंग्रेज लेखक हर्बट ग. वेल्सले १९१७ को महान् अक्टोबर समाजवादी क्रान्तिपछिका प्रथम वर्षहरूमा अज्ञानतामा छटपटाइरहेको देख्नु भएको थियो । उहांले त्यसताका लेख्नुभएको अनुभवहरूको संगालो पुस्तकको नाम **अंध्यारोको रूस** राख्नुभएको थियो ।

१९७५ को वर्ष एकदमै सुख्खा थियो र किसानको लागि कत्ति पनि अनुकूल थिएन । त्यसपछि १९७६ को बसन्त पनि उत्ति मैत्रीपूर्ण भएन । अन्न बाली पाक्ने समयको अर्थात् गृष्मको मौसमी अवस्था पनि धेरै राम्रा थिएनन् र बाली भित्र्याउने समयमा त पानी पर्न थाल्यो । तर प्रकृतिले अत्यन्तै राम्ररी संगठित श्रमको सामना गर्नुपऱ्यो र परिणामस्वरूप हामीले ज्यादै राम्रो अन्न बाली भित्र्यायौं ।

गत वर्ष सोभियत राष्ट्रिय अर्थव्यवस्थामा ३० लाखभन्दा बढी युवक-युवतीले प्रवेश गरे, सबलाई काम दिइयो । हाम्रो समाजवादी अर्थव्यवस्थाले बेरोजगारी भन्ने कुरा नदेखेको ४५ वर्षभन्दा बढी भइसकेको छ । त्यो तथ्यलाई

जर्जियाली गणराज्यको मेदफिउल्स्क धाउ सफा गर्ने संयन्त्रका निर्माताहरू ।



यूरोपको स्थितिसित तुलना गरिहेरौं । यूरोपेली समुदायका देशहरूका ५५ लाख बेकार मानिसहरूमध्ये एक तीहाइ तन्नेरी छन् । प्रत्येक छैठौं तन्नेरी एक दिन पनि काम गर्न नपाई बेरोजगारहरूको तांतीमा सामेल हुन्छ ।

ओलम्पिक खेलकूद गत बर्षको अर्को विशिष्टता थियो । अनौपचारिक तर मान्य कसीअनुसार २१ औं ओलम्पिक खेलकूदमा सोभियत संघले सबभन्दा बढी पदकहरू जित्यो, जर्मन प्रजातान्त्रिक गणराज्य दोस्रा र संयुक्त राज्य अमेरिका तेस्रा भए । अमेरिकाली पत्रकार जेम्स गोल्डबरोले स्वीकारेअनुसार, पश्चिम यूरोपेली देशहरू आफ्ना खेलाडीहरूलाई पूर्वी यूरोपका कम्युनिस्ट देशहरूका खेलाडीहरूभन्दा कता हो कता पछि परेको देख्दा खुशी भएनन् ।

१९७६ मा ५ करोडभन्दा बढी सोभियत जनताले नियमित शारीरिक व्यायाम गरे र १ करोड ५० लाखभन्दा बढीले खेलकूद उपाधि प्राप्त गरे । शायद यस विजयको एउटा कारण यही थियो ।

यस अंकमा हामी सोभियत संघको कार्य दिनबारे विस्तृत प्रकाश पार्दैछौं, अतः यस लेखमा हामी गत बर्षका केही घटनाहरूमाथि प्रकाश पार्ने केही तथ्यहरूको मात्र उल्लेख गर्दैछौं ।



मास्कोमा अंग एवं तन्तुहरूको प्रत्यारोपण इन्स्टिच्यूटका नयाँ भवन समूहको शिलान्यास गरियो । यस प्रकारको शल्योपचारलाई मानिसहरू जीवन प्रत्यारोपण पनि भन्दछन् । तर यस लक्ष्यको प्राप्तिमा तन्तुहरूको अनमेलता बाधाको रूपमा खडा भएको छ । नयां इन्स्टिच्यूटमा अत्यन्तै मिहिन अनुसन्धान गरिने छ र कम्प्यूटरको सहायता लिएर मात्र अन्तिम निर्णय गरिने छ । त्यसै दिन सोभियत संघको बिल्कुलै बेग्लै भागमा रहेका बाकुबाट दाहक प्रक्रियाहरूको उपचारका लागि तेब्राफेन नाउँको नयाँ औषधिको विकास गरिएको खबर आयो ।

उक्राइनको एउटा शहर रोभ्नोमा कठपुतली थिएटरको उद्घाटन भयो । सोभियत संघको अर्को गणराज्य जर्जियाको राजधानीमा अतिथिप्रेमी परीकथा पात्र त्सिकारको नाउंबाट केटाकेटीहरूको लागि नयाँ जलपान–गृहको पनि उद्घाटन भयो ।

विशाल तेलवाहक कुबान नोभोरोस्सिस्क बन्दरगाहबाट प्रस्थान गऱ्यो । यो झण्डै ३०० मीटर लामो जहाजले १,५०,००० टन इन्धन बोक्न सक्छ । सोभियत संघको दैनिक तेल उत्पादन (लगभग १५ लाख टन) ओसार-पसार गर्न यस्ता दशौटा जति जहाज चाहिन्छ । अनि सोभियत संघका अत्यन्तै द्रुतगतिमा विकास गरिरहेका तेल क्षेत्रहरूमध्ये एउटा सामोत्लेरका तेलकर्मीहरूले १९७६ भरिमा १२ लाख मीटर तेलका कुवाहरू खने ।

नेपालका कलाकारहरूले सोभियत संघको भ्रमण गरे । अरू जनतासित सांस्कृतिक निधिको आदानप्रदानको यो एउटा उदाहरण मात्र हो । जम्माजम्मी गरेर १२० देशहरूसित सोभियत संघको सांस्कृतिक सम्बन्ध छ । दुइ सयजति सोभियत कला संस्था बा टोलीले विदेशी मुलुकहरूमा कला प्रदर्शन गरे र १५० जतिले हाम्रो देशका झण्डै १०० शहरहरूमा कार्यक्रम देखाए । गत वर्ष हाम्रो देशमा प्रकाशित जम्मा एक लाख जति पुस्तक–पुस्तिकाहरूमध्ये म एउटाको मात्र

उल्लेख गर्न चाहन्छु । यो फासिज्ममाथि विजयको ३० औं जयन्ती मनाएको समयमा **प्राभदा**-का पाठकहरूले पठाएका चिठ्ठीहरूको **संकलन खोजहरूको पुस्तक** हो । पुस्तक दुइ भागमा विभाजित छ : पहिलो भागमा दोस्रो विश्व युद्धमा धराशायी भएका, अझै समाधि स्थल पत्ता नलागेका, र सम्बन्धीहरूले खोजिरहिएका मानिसहरूको नामको सूची छ । दोस्रो भागमा ती मानिसहरूको नामको सूची छ, जसका समाधिहरू पत्ता लागिसकेका छन् र सम्बन्धीहरूकोखोज गरिंदै छ ।

झण्डै झण्डै पुस्तक प्रकाशित भएकै दिन आफ्नो क्षेत्रको इतिहासको अध्ययन गर्ने किशोर-हरूको "लाल पथान्वेषकहरू" नामको टोलीले स्ताराया रूसमा (रूसको उत्तर पश्चिम भाग) शहर नजीकै एक सिपाहीका अवशेषहरू फेला पारेको समचार आयो । ती सिपाहीको नाम गिग्रोरी माक्सिमकिन थियो भन्ने पनि उनीहरूले पैल्याए । लामो खोजीपछि पथान्वेकहरूले आफ्नो चिठीमा लेखें,. . . " उनको छोरा निकोलाईलाई फेला पारे । निकोलाईले आफ्नो चिठीमा लेखे :" बा युद्धमा जाँदा १४ वर्षको थिएं । १९४२ देखि यता मैले उहांको कुनै खबर पाएको छैन । अहिले यस्तो लाग्छ, म उहांलाई फेरि भेट्दै छु. . .।"

यो युद्धको एक सानो अंश मात्र हो, भनौं न, युद्ध सकिएको तीन दशकपछि एउटा हृदयमा गुञ्जिएको यसको प्रतिध्वनि हो ।

यसैले त शान्तिको लागि संघर्ष धरतीको सबभन्दा ठूलो र महत्त्वपूर्ण संघर्ष भएको छ । गत वर्षैभरि, र त्यस्तै त्यस अघिका वर्षहरूमा, हामी देतांतको निम्ति अविचल संघर्ष गर्दै आएका छौं, यसप्रति कहिल्यै उदास भएका छैनौं, संशय-वादीहरूको कुरा सुनेका छैनौं । उचित नाराहरूको घोषणा गर्नु मात्र पर्याप्त छैन, तिनलाई अन्तर-राजकीय सम्बन्धहरूको मानमा परिणत गर्नु बढी महत्त्वपूर्ण छ भन्ने हामीलाई थाहा छ । आज धरतीमा संचित शस्त्रास्त्रहरू पृथ्वीलाई सयौं पटक चकनाचूर पार्न पर्याप्त भएको कुरा बारम्बार दोहऱ्याइएको छ । आजको नाभिकीय अस्त्र दोस्रो विश्व युद्धका वर्षहरूमा विस्फोट गरिएका सबै कुराभन्दा बढी विनाशकारी छ ।

जहाँसम्म राज्यहरूबीचको सम्बन्धको प्रश्न छ, शस्त्रास्त्रको होडको अन्त्य गर्ने र निःशस्त्री-करणका प्रश्नहरू शान्ति सेनानीहरूले समाधान गरेका अरू अनेकौं प्रश्नहरूमध्ये सबभन्दा ठूला र महत्त्वपूर्ण छन् । यो कुरा गत वर्ष सोभियत संघले शान्तिको दिशामा उठाएका कैयौं दृढ पाइला-हरूमध्ये एक, शस्त्रास्त्रको होड रोक्ने प्रश्नहरू र निःशस्त्रीकरणको सम्बन्धमा सोभियत संघको स्मृति–पत्रमा उल्लेख गरिएको छ ।

सोभियत कम्युनिस्ट पार्टी केन्द्रीय समितिका महासचिव लि. इ. ब्रेझनेभले घोषणा गर्नुभएको छ, "आज यो लक्ष्य अघि अघिभन्दा बढी महत्त्व-पूर्ण भएको छ । मानवजाति शस्त्रास्त्रको थुप्रोमाथि बस्दा बस्दा थकित भइसकेको छ, तैपनि आक्रामक साम्राज्यवादी गुटहरूले भड्काएको शस्त्रास्त्रको होड झन् झन् गहन भइरहेछ ।"

जर्मन प्रजातान्त्रिक गणराज्यको राजधानी बर्लिनमा १९७६ जूनको अन्त्यतिर यूरोपका २९ कम्युनिस्ट तथा श्रमिक पार्टीहरूको सम्मेलन भएको थियो । यसले यूरोपमा "शान्ति, सुरक्षा, सहयोग र सामाजिक प्रगतिको निम्ति" दस्तावेज पारित गऱ्यो । कम्युनिस्टहरूले जनताको चीर-इच्छित लक्ष्यप्रति–– निर्भरयोग्य एवं विश्वस्त शान्तिप्रति अघि बढ्ने मार्ग निर्धारित गरेका छन् । उनीहरूले ऐतिहासिक हेलसिन्की सम्मेलन द्वारा घोषित राज्यहरूबीच शान्तिपूर्ण सम्बन्ध र सहयोगको नियमका सिद्धान्तहरूप्रति आफ्नो निष्ठाको पुनः पुष्टि गरे ।

१९७६ सित बिदा लिंदा, हामी यस अवधिमा भएका सबै कुराहरूको एक सानो अंश मात्र उल्लेख गर्न सक्तछौं । सोभियत लेखकहरूको अधिवेशन, नयाँ अन्तरिक्षयानहरूको प्रक्षेपण र अरू कैयौं कुराको हामीले उल्लेख नै गरेनौं । सबैले साझा प्रयासमा योगदान गर्दै आ–आफ्ना ठाउबाट काम गरे र हरेकले निरन्तर भरिंदै गएको सामुहिक कोषबाट लाभ लिए । किनभने हाम्रो देशमा सबै कुरा मानिसको लागि,मानिसको हितको लागि गरिन्छ । गत वर्षमा पनि यही कुरा लागु हुन्छ । ★

# संक्षिप्त समाचार

## जनताको समृद्धि नै सर्वोच्च लक्ष्य

नयां सोभियत पांच–वर्षे योजना अवधिमा समाजवादी जीवनप्रणालीका सबै पक्षहरूको विकासमाथि विशेष ध्यान दिइरहिएको छ ।

१९७६–१९८० मा मजदूर र कर्मचारीहरूको वेतन तथा सामाजिक उपभोग कोषबाट हुने भुक्तानीहरूको वृद्धिबाट मानिसहरूको आम्दानी २१ प्रतिशतले बढ्ने छ । कारखानाका मजदूर र अड्डा कर्मचारीहरूको सालाखाला वेतन प्रतिमहीना १७० रूबलभन्दा घटी हुनेछैन (१९६५ मा साला-खाला वेतन ९६.५ रूबल थियो ।) सामूहिक किसानहरूको पारिश्रमिक यस अवधिमा २६ प्रतिशत बढ्ने छ । सामाजिक उपभोग कोषबाट पाइने भुक्तानी र लाभहरूमा ३० प्रतिशतको वृद्धि हुनेछ ।

श्रमजीवी मानिसहरूको आयमा छिट्छिटो हुने वृद्धिसंगसंगै उपभोक्ता मालको उत्पादन पनि बढ्ने छ फुटकर बेपारको राशिमा यी पांच वर्षहरूमा २९ प्रतिशतको वृद्धि गर्ने योजना छ ।

## सोभियत संघमा आवास निर्माण

नयां सोभियत पांच–वर्षे योजना अवधिको प्रत्येक वर्षमा १ करोड १० लाख व्यक्तिहरूको आवास–स्थितिमा सुधार हुनेछ । १९७६–१९८० को योजनामा आवास–निर्माणमाथि विशेष ध्यान दिइएको छ ।

सोभियत संघमा घरभाडा १९२८ देखि आजसम्म एकैनासको छ र सामुदायिक सेवाहरूका दर पनि बितेका ३० वर्षहरूदेखि स्थिर छन् भन्ने कुरा उल्लेखनीय छ ।

## सुल्तान रहमानोभको नयाँ राष्ट्रिय कीर्तिमान

द्नेप्रोपेत्रोभ्कका एक छात्र सुल्तान रहमानोभले यहां सोभियत संघको कप भारोत्तोलन प्रतियोगितामा सुपर हेभीवेट डिभीजनमा १९३ किलोग्रामको एउटा नयां राष्ट्रिय स्न्याच कीर्तिमान स्थापित गरेका छन् । यो उनको आफ्नो अघिल्लो राष्ट्रिय स्न्याच कीर्तिमान स्थापित गरेका छन् । यो उनको आफ्नो अघिल्लो राष्ट्रिय कीर्तिमानभन्दा आधा किलोग्राम बढी हो । ★

# सोभियत सत्ताको प्रारंभिक कालमा कृषिक्षेत्रको व्यवस्था

—मिखाइल सुखानोभ

नोभेम्बर ८, १९१७ मा, अर्थात् महान् अक्टोबर समाजवादी क्रान्तिको बिजयको दोस्रो दिनमै, पारित गरिएको भूमि–सम्बन्धी आज्ञप्ति सोभियत सत्ताले स्वीकृत गरेका प्रथम कानूनहरूमध्ये एक थियो ।

यस आज्ञप्तिले जमीनको राष्ट्रियकरणको घोषणा गऱ्यो, तथा जमीन कृषकवर्गलाई निःशुल्क उपयोगको निम्ति सुम्पियो । किसानहरूले जमीन पाए, तर यसको उपयोग कसरी गर्ने ? कृषि औजारहरू कहाँबाट लिने ? सोभियत सरकारले किसानहरूलाई वित्तीय सहायता र कृषि औजारहरू दिएर मदत गऱ्यो । यो आवश्यक थियो किनभने क्रान्ति पूर्वको रूसमा २ करोड घरखेतहरूमा १ करोड ३० लाख गरीब किसानहरूका थिए, ६० लाख किसानहरूसित घोडा थिएनन् र ७० लाख किसानहरूसित कृषि औजारहरू थिएनन् ।

अप्रिल १९१८ मा, अत्यन्त सीमित सुविधाहरू हुंदाहुंदै पनि सोभियत सत्ताले किसानहरूलाई बीउ किन्नको निम्ति ऋण उपलब्ध गर्ने उद्देश्यले ५ करोडको एउटा विशेष कोषको स्थापना गऱ्यो । त्यसै बर्षको अन्त्यमा सोभियत सरकारले त्यसै उद्देश्यको लागि अर्को ३० करोड रूबल धन निर्धारित गऱ्यो । यो त्यस बेला गरियो जतिबेला राज्यलाई एक एक रूबलको अत्यन्त ठूलो जरूरत थियो ।

ग्रामीण इलाकालाई कृषि औजारहरूको आपूर्तिमा सुधार गर्न निकै काम गरियो । आर्थिक विश्रृंखलताका अवस्थाहरूमा त्यो समस्याको समाधान गर्न कठिन थियो । तर पनि छोटो अवधिभित्रैमा कृषि औजारहरू बनाउने ४००० संयन्त्रहरू चालु गरिए । स्वाभाविकै कुरा थियो, तिनताका ट्र्याक्टरहरूको उत्पादन गर्न सकिन्नथ्यो, तर नयां हलोहरू र दाँदेहरू भने बनाइए ।

गृहयुद्ध र विदेशी हस्तक्षेपको अन्त्यपछि किसानहरूलाई राज्यद्वारा दिइने वित्तीय र औजारहरूको सहायताले नयाँ रूप धारणा गऱ्यो । १९२२ मा कबुलियत व्यवस्था अस्तित्वमा आएकोले शहर र गाउँबीच कृषि उपजहरूको क्रय–विक्रयले त्यो नयां रूप लियो ।

यो नयाँ रूप राजकीय सहकारी खरीद संस्थाहरू र किसानहरू बीच कबुलियत थियो । यस अन्तर्गत राजकीय स्वामित्वका वा सहकारी संस्थाहरूले किसानहरूलाई कृषि औजारहरू, उच्च कोटिका बीउ, असल जातका गाई, खाद्य पदार्थ (कपास र अन्य औद्योगिक बाली लगाउने किसानहरूको निम्ति), बोटबिरुवामा लाग्ने रोगहरू र कीराहरूले नाश गर्ने रासायनिक पदार्थहरू आपूर्ति गर्ने तथा किसान हरूलाई ऋण उपलब्ध गराउने उत्तरदायित्व लिए । आफ्नो तर्फबाट किसानहरूले एक वा अर्को उपजको एक निश्चित अंश ती संस्थाहरूलाई बेच्न वचनवद्ध भए ।

कबुलियतले किसानहरूलाई कृषि स्तरहरूलाई माथि उठाउन खाद्य तथा कृषिसम्बन्धी काँचा पदार्थहरूका राष्ट्रिय स्रोतहरूमा वृद्धि गर्न मदत गऱ्यो । र विशेष महत्त्वको कुरा के हो भने यसले किसानहरूको युगौं पुरानो कठिन समस्या––उचित मोल मा आफ्नो उपज कहां बेच्ने भन्ने समस्या––समाधान गऱ्यो ।

ऋण सहकारी संस्थाले किसानहरूलाई वित्तीय सहायताको व्यवस्थाको काममा महत्त्वपूर्ण भूमिका खेल्यो । १९२२ मा स्थापित यस किसिमको सहकारी संस्थाले गरीब र मध्यम किसानहरूलाई आफ्ना खेतहरू पुनः उद्धार गर्न मदत गऱ्यो । ऋण सहकारी संस्थाले अनुकूल शर्तहरूमा किसानहरूलाई धन उपलब्ध गऱ्यो र यसरी ग्रामीण इलाकाबाट साहुहरू (सूदखोरहरू)– को वर्गको उन्मूलन भयो ।

छोटो समयभित्रैमा ऋण सहकारी संस्थाले किसानहरूमा ठूलो लोकप्रियता पायो । यसको स्थापनाको केही पछि नै यसले ६५ लाख किसान र करीब १०,००० स्थानीय ऋण प्रदान र ऋण तथा बचत संस्थाहरूलाई एकाबद्ध गऱ्यो ।

ऋण प्रदान गर्ने संस्थाहरू क्रान्ति–पूर्वको रूसमा पनि अस्तित्वमा थिए, तर समाजवादी गणराज्यको ऋण प्रणालीहरूसित यी बिल्कुलै मिल्दैनन् । जारशाही अन्तर्गत ऋण दिने प्रतिष्ठानहरू धनिक वर्गहरूका प्रतिनिधिहरूले बुर्जुवा र जमीन्दारहरूको हितमा चलाउँदथे र श्रमजीवी किसानहरूको शोषणको साधनको रूपमा यो ऋणको उपयोग गरिन्थ्यो । उदाहरणको लागि, १९१७ मा किसानहरूलाई भूमि बैंकको करीब १५० करोड ऋण थियो, उता जमीन्दारहरू र सूदखोरहरूलाई दिनुपर्ने व्यक्तिगत ऋणहरू त अलग्गै छंदै थिए ।

अक्टोबर क्रान्तिले किसानहरूलाई यस बन्धनबाट मुक्त गऱ्यो र तिनीहरूलाई लगाइएका ऋणहरू रद्द गरिए । जमानती बैंकहरूको पनि उन्मूलन गरियो ।

ससाना निजी खेतीको विकास ऋणहरू बिना नहुने हुनाले किसानहरूले पनि सजिलै ऋण पाउन सक्ने ऋण प्रणाली सोभियत कृषि नीतिको एउटा मुख्य आधार-बिन्दु हो ।

पूंजीवादबाट समाजवादमा संक्रमणको अवधिमा सोभियत सरकारले आफ्नो ऋण नीतिमा गरीब र मध्यम किसानहरूले स्थापना गरेका सामूहिक कृषिशालाहरूप्रति विशेष ध्यान दियो । यी कृषिशालाहरूको आर्थिक भूमिका अझै गौण नै थियो । लेनिनले तिनमा ग्रामीण इलाकामा नयाँ समाजवादी प्रणालीका टूसाहरू देख्नुभयो र हरेक सामाजिक प्रणाली, उहाँले जोड दिनुभयो, कुनै निश्चित वर्गको वित्तीय सहायताबाट मात्र जन्म लिन्छ । तिनताका यसको अर्थ किसानहरू, सामूहिक कृषिशाला प्रणालीका प्रथम निर्माताहरूलाई श्रमजीवी जनताको सहायता नै थियो ।

नोभेम्बर १९१८ मा लेनिनको अग्रसरतामा सोभियत सरकारले तिनताका देशभरि नै स्थापना भइरहेका सामूहिक कृषिशालाहरूको मदतको निम्ति १०० करोड रूबलको एउटा विशेष कोश खडा गरेको थियो ।

~

# साइबेरियाका आल्मुनियम कारखाना

–जान काल्सेर

दोस्रो विश्वयुद्धको प्रारंभको अघिल्लो वर्ष, अर्थात् १९४० मा समस्त सोभियत उद्योगले जति वस्तुहरू उत्पादन गर्दथ्यो वर्तमान साइबेरियाली उद्यमहरूले त्योभन्दा ५० प्रतिशत बढी उत्पादन गर्दछन्। साइबेरिया आज कोइला, इस्पात, काठपात, तेल, ग्यांसको मात्र मुख्य उत्पादनकर्ता नभएर आल्मुनियमको पनि उत्पादन गर्दछ ।

१९७६–१९८० को लागि सोभियत संघको राष्ट्रिय अर्थव्यवस्थाको विकासका निर्देशनहरूमा औंल्याइएअनुसार दशौं पाँच वर्षे योजना अन्तर्गत देशका आल्मुनियम उत्पादनमा समस्त वृद्धिको ग्यारन्टी पूर्वी इलाकाहरूले नै गर्नेछन्, जुन १.२–१.३ गुनाले बढ्ने छ ।

मध्य साइबेरियामा खडा गरिएका उद्यमहरूले यो उपलब्धि हासिल गर्न महत्त्वपूर्ण भूमिका खेल्नेछन्। तिनले धाउ निकाल्नेछन्, काँचो पदार्थ––अलुमिना उत्पादन गर्नेछन् र आल्मुनियम बनाउने छन् ।

साइबेरियामा यस आल्मुनियम "कन्भेयर" को निर्माणलाई कहिलेकाहिं द्वितीय विश्व युद्धको लगत्तैपछि, जतिवेला सोभियत संघले आफ्नो राष्ट्रिय अर्थव्यवस्थाको पुनरुद्धार थालेको थियो, अमेरिकाद्वारा सोभियत संघलाई आल्मुनियम बिक्रीमाथि लगाइएको रोकसित जोडिन्छ । हो, यो रोक अतिरिक्त कार्यप्रेरणा बन्यो । तर विशाल साइबेरियाली साधन– स्रोतहरूको उपयोगसम्बन्धी योजना







माथिबाट तल:–

अचिन्स्क खानी र धाउ सफा गर्ने मील साइबेरियाको औद्योगिक विकासमा नयां उपलब्धि हुन् ।

किया–शाल्ती नेफलाइन खानीमा अ. दोरोखोभ एक्सकेभेटर चलाउँदैछन् ।

खुला खानीमा आज सबै काम पूरै मेशीनीकृत भएको छ ।





**क्रास्नोयार्स्कमा कैयनवर्ष काम जोभ गरेकाले उज्बेक रुस्लान उराजोभ अब आफूलाई साइबेरियाकै निवासी ठान्दछन् ।**

**विशालकाय रोटरी फर्नेशहरू आल्मुनियम अक्साइड उत्पादन गर्छन् । यो आल्मुनियम उत्पादनको निम्ति काँचो पदार्थ हो ।**

**क्रास्नोयार्स्कको आल्मुनियम कारखानामा ।**



भने चौथो दशकतिरै तयार पारिएको थियो । युद्धले गर्दा यसको कार्यान्वियन स्थगित भएको थियो। तर विगत १५ वर्षमा बनेका साइबेरियाली आल्मुनियम संयन्त्रहरूले गर्दा सोभियत संघले व्यापारमा गरिएको यस विभेदले गर्दा हुन गएको क्षतिलाई निष्प्रभाव मात्र पारेन अपितु सोभियत संघ यस धातुको निर्यातकर्ता पनि बनेको छ । (अहिले सोभियत संघ वर्षेनी ५ लाख टन आल्मुनियम निर्यात गर्दछ ) ।

हामी क्रास्नोयार्स्क आल्मुनियम संयन्त्रलाई हेरौं । त्यहां भएका इलेक्ट्रोलाइजरका अनन्त पंक्तिहरूलाई हेरौं, जहाँ विद्युत् शक्तिहरूले सेतो अलुमिना धुलोलाई चाँदीजस्तो धातुमा परिणत गर्दछन् । त्यहाँको हरेक एकाईले त्यो परिणाम विद्युत् शक्ति खपत गर्छ जति एउटा मध्यम आकारको शहरलाई झिलिमिली पार्न पर्याप्त हुन्छ । एउटा उच्च भोल्टेजको ट्रान्समिशन लाइनले संयन्त्रलाई येनिसेइ नदीमा बनेको विश्वको सबभन्दा ठूलो क्रास्नोयार्स्क जलबिजुली केन्द्रसित जोड्दछ ।

यो आल्मुनियम "चमत्कार" कम खर्च लाग्ने साइबेरियाली विद्युत् शक्तिमा आधारित छ । यो विद्युत् शक्ति भोल्गामा बनेका जलविद्युत् केन्द्रहरूले उत्पादन गर्ने बिजुली भन्दा ५।६ गुना सस्तो छ । काँचा पदार्थहरू साइबेरियामा टाढा-टाढाका ठाउँहरूबाट ल्याइनु परे तापनि यहाँको आल्मुनियम उत्पादन फाइदाजनकनै हुन्छ । तर यस विशालकाय आल्मुनियम संयन्त्रलाई कांचा मालहरूको सम्भरण गर्ने समस्या नयां ढंगमा-- नेफेलाइनको आधारमा समाधान गरिएको छ जसका साधन–स्रोतहरू अक्षय नै छन् भने पनि हुन्छ। चालीस वर्षजति अघि सोभियत एकेडेमीसियन अ. फार्सम्यानले धातुविद्हरूको ध्यान यस खनिज धातुतर्फ खिच्नुभएको थियो । नेफेलाइन प्रविधि बक्साइटको उपयोगभन्दा बढी जटिल हुन्छ भन्ने कुरा सांचो हो । त्यसैले नै नेफेलाइन विश्वमा अन्यत्र कतै पनि ब्यवहार गरिएको थिएन।

हामीले आल्मुनियम कन्भेयर हुंदै यात्रा

गऱ्यौं । यो कुज्नेत्स्क पर्वतमालाको नेफेलाइन पहाडको क्रास्नोयार्स्कबाट ४० किलोमीटर टाढाबाट शुरू हुन्छ । यहाँ एउटा विशालकाय खानी र अचिन्स्क खानीकर्म र धाउ सफा गर्ने उद्यम समूहहरू काम गर्छन् । खनिज पदार्थको प्रयोग संघटित रूपमा गरिन्छ : अलुमिना मात्रै होइन अपितु सिमेन्ट र अन्य बहुमूल्य उपजहरू पनि यहाँबाट प्राप्त हुन्छ । त्यसैले उच्च गुणको सिमेन्ट उत्पादन गर्ने समस्या, साइबेरियामा यो जटिल समस्या थियो, समाधान गरिंदैछ । अब गहन निर्माण कार्य भइरहेको यस भू–भागमा टाढा टाढाका क्षेत्रहरूबाट सिमेन्ट ढुवानी गर्नुपर्ने कुनै आवश्यकता छैन ।

हामीसित क्रास्नोयार्स्क आल्मुनियम संयन्त्रको उत्पादन विभागका प्रमुख मिखाइल सिनानी हुनुहुन्थ्यो । १७ वर्ष अघि मैले उहाँलाई यहाँ भेटेको थिएँ जतिबेला यस संयन्त्रका भवनहरू-मध्ये एउटाको जग हाल्ने काम भएको थियो । त्यस बखत उहां बुल्डोजर–चालकका शिष्यको रूपमा काम गर्नुहुन्थ्यो ।

"हामीले यस संयन्त्रको निर्माण गऱ्यौं र यस संयन्त्रले हामीलाई रूप दियो", मिखाइल सिनानीले आफ्नो तथा आफ्ना साथीहरूको बारेमा भन्नुभयो जसलाई तन्नेरी कम्युनिस्ट लीगले येनिस्सेइ पठाएको थियो ।

क्रास्नोयार्स्कमा हामी गएको समयमै एउटा नयां अचिन्स्क–कान्स्क इन्धन निकाल्ने र विद्युत उत्पादन गर्ने संयन्त्रको स्थापना गर्ने सम्बन्धी प्रश्नहरूमाथि छलफल गर्न शहरशा प्रसिद्ध विशेषज्ञहरूको एउटा सम्मेलन भएको थियो । निर्माण कार्य थालिसकिएका प्रथम खण्डका जल तथा तापबिजुली केन्द्रहरूले आजका समस्त साइबेरियाली शक्ति शृंखलाले उत्पादन गर्नेभन्दा कैयन गुना बढी उत्पादन गर्ने छन् । ऊर्जाको यस समुद्रले आल्मुनियम उद्योगलगायत साइबेरियाका ऊर्जा चाहिने उद्योगहरूका सम्भावना । हरूको विस्तार गर्नेछ ।

क्रास्नोयार्स्क आल्मुनियम संयन्त्र भोलिका अति कार्यकुशल उद्यमहरूको प्रारूप हो । दोस्रो अल्मुनियम "कन्भेयर", जो पहिलेको भन्दा झन बढी शक्तिशाली हुनेछ, सायानोगोर्स्कमा येनिसेइको माथिल्लो प्रवाह क्षेत्रमा स्थापना गरिदैछ । यो सायानो–शुशेन्स्काया जलविद्युत केन्द्रभन्दा धेरै टाढा छैन ।

साइबेरियामा, र खास गरेर सोभियत संघको सुदूर उत्तरमा, जहाँ द्रुत औद्योगिकरण कार्य भइरहेछ र जहां काठपात र लौह धातुहरूको कमी छ, आल्मुनियम मुख्य निर्माण–सामग्री हुनेछ । आल्मुनियमबाट सुविधाजनक, सुन्दर र चीरस्थायी शहरहरू र संयन्त्रहरू अस्तित्वमा आउने छन् । यो साहसिलो कल्पना साकार हुँदैछ ।



**अचिन्स्कको खानी तथा धाउ सफा गर्ने कारखानामा काम गर्ने इन्जिनीयर भालेन्तिना पोपोभा इर्स्कुत्स्क विश्व विद्यालयकी स्नातक हुन् । यो विश्वविद्यालय साइबेरियाका आल्मुनिय उद्योगको निम्ति आवश्यक उच्च प्रशिक्षित कार्यर्ताहरू तालीमा गर्दछ ।**



**क्रास्नोयार्स्कमा आल्मुनियम कारखानाको आवासीय क्षेत्र जहां आरामदायी आधुनिक फ्ल्याटर छन् ।**

**अघिल्लो पातामा :–**

**साइबेरियामा बनेको आल्मुनियम ।**

**आल्मुनियम कारखानामै जोडिएको विशेषीकृत प्राविधिक स्कूल**

**चित्रमा : व्यावसायिक तालीमका विशेषज्ञ अनातोली शातुनोभ (बीचमा) आफ्ना शिष्यहरूका साथमा ।**



# विद्यार्थीहरू उत्कण्ठित र व्यावहारिक हुन्छन्

–रबर्ट त्साफासमान

“केही वर्ष अघि हामीले अक्सर एउटा गम्भीर समस्याको सामना गर्नुपर्दथ्यो । त्यो समस्या थियो प्रथम र द्वितीय वर्षका कलेज विद्यार्थीहरूबीचमा पढाइमा देखिने नराम्रो प्रगति”, लेनिनग्राद पोलिटेक्निकल इन्स्टिच्यूटका शिक्षाध्यक्ष कोन्स्तान्तिन सोलेजनेभ भन्नुहुन्छ । पाठ्यक्रम जटिल छ र हामी शैक्षिक अध्ययनहरूको क्रममा यसमा नवीकरण गर्ने कोशिश गर्छौं जसबाट यो विद्यार्थीहरूको भावी कामहरूका निम्ति चाहिने आवश्यकताहरूको अनुकूल होस् । तर यो सबको निम्ति विद्यार्थीहरूमा कडा आत्मा-अनुशासन तथा समुचित रूपमा आफ्नो समयको सदुपयोग गर्न सक्ने क्षमता चाहिन्छ ।

सामान्य सुझबुझले एउटै निष्कर्ष सुझाउँछ : विद्यार्थीहरूको अग्रसरता, तिनीहरूको स्वाधीनता र उत्तरदायित्व–बोधलाई बढाउनु । विद्यार्थीहरूको अग्रसरतामाथि जुन जोड दिइको त्यसबाट तिनीहरूको शैक्षिक प्रगतिमा अनुकूल प्रभाव पर्‍यो ।

उदाहरणको रूपमा वैज्ञानिक कामलाई नै लिउँ । स्वतन्त्र अनुसन्धान आज तिनीहरूको नियमित अध्ययनको एक अंग नै भएको छ । यसले विद्यार्थीहरूको भावी पेशामा तिनीहरूको सिर्जनात्मक दृष्टिकोणलाई बढाउँदछ । विद्यार्थी अनिवार्य पाठहरूमा मात्र आफूलाई सीमित राख्दैन, गम्भीर अनुसन्धान कार्यमा पनि आफ्नो प्रशस्त समय दिन्छ ।



**इन्स्टिच्यूटका कैयन् विद्यार्थीहरू विद्यार्थी डिजाइनिंग ब्यूरो र वैज्ञानिक विद्यार्थी समाजका सदस्य छन् ।**

हाम्रा सबै कलेज विद्यार्थीका २५ प्रतिशतभन्दा बढी विद्यार्थीहरू वैज्ञानिक समाजका सदस्य छन् । तिनीहरूले तयार पारेका प्रायः जसो अनुसन्धान लेखहरू व्यवहारमा प्रयोग गरिन्छन्–तिनीहरू लेनिनग्रादका उद्यमहरू र डिजाइन संगठनहरूको माग अनसार तयार पारिएका हुन् । भावी इन्जिनीयरले वैज्ञानिक समस्याहरूसित कसरी जुध्ने र व्यवहारमा आफ्नो ज्ञानलाई लगाउने भन्ने कुरा सिक्दछ ।

यहाँ यो पनि भनिदिउँ,

**लेनिनग्राद पोलिटेक्निकल इन्स्टिच्यूटका विद्यार्थीहरू मे दिवस जुलूसमा । त्यस जुलूसमा ५२ मुलुकका विद्यार्थीहरू पनि थिए ।**

**कालिनिन लेनिनग्राद पोलिटेक्निकल इन्स्टिच्यूट सोभियत संघमा व्यापक विषयका उच्च सीप भएका विशेषज्ञहरू तालीम गर्ने शैक्षिक प्रतिष्ठान हो ।**

**गर्मीयामको अन्त्यमा, विद्यार्थीहरू आफ्नो व्यावहारिक कामबाट फर्के पछि, इन्स्टिच्यूटको मनोरञ्जन शिविरमा चहल–पहल हुन थाल्छ । यो शिविर लेनिनग्राद नजीकै मनोरम सल्लाका घारीमा अवस्थित छ ।**





**विद्यार्थीहरू राम्रो ठट्टा खूब रुचाउँछन्।**

व्यावहारिक सीपहरूको विकास शैक्षिक अवधिमा मात्र नभएर गर्मीका छुट्टीको समयमा पनि गर्न सकिन्छ । विद्यार्थी, निर्माण टोलीहरू जस्ता संगठनहरू विद्यार्थीहरूमा सबभन्दा लोकप्रिय छन् । कलेजमा त्यस्ता ५० टोली छन् जसमा २००० विद्यार्थी संलग्न छन् । तिनीहरू कृषिशाला, स्कूल, अस्पताल र क्लबहरूका निर्माण गर्छन् र यसरी तिनीहरू आपनो भावी कामको निम्ति आवश्यक सांगठनिक सीपहरू सिक्दछन् । तिनीहरू स्थानीय जनताबीच शैक्षिक गतिविधिमा पनि संलग्न रहन्छन् : तिनीहरू प्रवचनहरू दिन्छन्, संगीत कार्यक्रम आयोजना गर्दछन् केटाकेटीहरूको निम्ति विदाबिताउने शिविरहरूको संगठन गर्छन्।

पोलिटेक्निकल इन्स्टिच्यूटका विद्यार्थीहरूका लेनिनग्रादका निवासीहरूसित र खास गरेर श्रमिक तन्नेरी र स्कुले केटाकेटीहरूसित व्यापक सम्पर्कहरू छन् । तिनीहरू आपना संरक्षण अन्तर्गत रहेका उद्यमहरूमा सामाजिक–राजनीतिक तथा वैज्ञानिक विषयहरूमा प्रवचनहरू दिन्छन्; तिनीहरू छलफल र विचारविमर्श गर्दछन् तथा यी उद्यमहरूका तन्नेरीहरूसित मिलेर मनोरञ्जन समारोहहरूको आयोजना गर्दछन्।

कलेज विद्यार्थीहरू पनि तिनीहरूको संरक्षण अन्तर्गत रहेका स्कूलहरूमा स्वेच्छिक आधारमा विभिन्न सोखीन (रेडियो-प्रोद्योगिकी, भौतिकशास्त्र तथा रसायनशास्त्र) मण्डलीहरू तथा खेलकूद विभागहरू चलाउँदछन् । केही विद्यार्थीहरूका आफ्नै "शिष्यहरू"–स्कूले केटाकेटीहरू–हुन्छन् जसले आपनो अध्ययनमा राम्रो प्रगति गरेका हुन्नन् र कहिले काहिं नियन्त्रणबाट केही बाहिर पुगेका हुन्छन् । संक्षेपमा भन्दा आपना अध्ययनहरू र वैज्ञानिक अनुसन्धानलाई गम्भीरताका साथ लिएर पनि विद्यार्थीहरू आपनो भावी पेशासित प्रत्यक्ष सम्बन्धित क्षेत्रमा मात्र आफूलाई सीमित राख्दैनन् । विद्यार्थी जति छिटो सम्भव आफूलाई सामाजिक दृष्टिले सक्रिय र बहुमुखी व्यक्तिको रूपमा प्रकट गर्न चाहन्छ र आफूले डिप्लोमा प्राप्त गर्नु अघिनै समाजको लागि उपयोगी बन्ने कोशिश गर्दछ।

अर्कोतिर सामाजिक काम विद्यार्थी स्वयंको लागि पनि उपयोगी हुन्छ । यसले उसलाई विशेषज्ञ बन्न मात्र मदत गर्ने होइन अपितु आफ्नो वरिपरिको जीवनप्रति ठूलो अभिरुचि राख्ने बहुमुखी व्यक्तित्वको रूपमा पनि उसलाई ढाल्दछ ।

जनतासित मिसिएर काम गर्ने तथा स्वतन्त्र रूपले निर्णयहरू लिन सक्ने क्षमता हुनु भावी विशेषज्ञ तथा उत्पादन प्रबन्धकको निम्ति अत्यन्त आवश्यक छ ।





**१९७५ वसन्तमा अखिल संघीय लेनिनवादी कम्युनिस्ट सुबोत्निकको समयमा विद्यार्थीहरू लेनिनग्रादको प्रतिरक्षकहरूको स्मृतिमा स्मारक बनाइरहेका छन ।**



**चिलीका जनतासित ऐक्यवद्धताको एउटा सभामा।**



# तरंग-ज्वर

## (ब्रूसेलोसिस वा माल्टा फिभर)

–भिताली कारेत्नी,
चिकित्सक

तरंग ज्वरका व्याधीमूलहरू, ०.५ देखि १.५ माइक्रोन आकारका छडी–जस्ता रोगाणुहरू हुन्छन् । ती पर्यावरणमा निकै टिकाउ हुन्छन् ।

यो रोग अक्सर रोगी पशुहरूको दूध र दुग्ध उपजहरूको उपयोगको परिणामस्वरूप हुन्छ, कहिलेकांही कांचो वा अधकल्चो मासु खानाले पनि हुन्छ ।

यसको पेशागत रूप पनि देखिएको छ––यस रोगद्वारा ग्रस्त कृषिशालामा काम गर्ने मानिसहरू र यस्ता कृषिशालाहरूले आपूर्ति गर्ने कच्चा पदार्थ संकलन र प्रक्र्याकरण गर्ने काममा लागेका मानिसहरूमा अक्सर यो रोगको विकास हुन्छ। रोग संक्रमण श्लैश्मिक झिल्ली वा क्षतिग्रस्त छालामार्फत हुन्छ ।

तरंग ज्वर वर्षको विभिन्न मौसममा विभिन्न गतिमा फैलिन्छ । वसन्तमा सबभन्दा बढी रोगी देखिन्छन् । मानिसहरू सामान्यतः भेडाबाखा, गाई, सुंगुर जस्ता घरेलु पशुहरूमा रोग फैलिएको वेला बिरामी पर्दछन् । मृग, ऊँट, खच्चर र कुकुरहरूबाट छुत लागेको पनि देखिएको छ।

बाखा र भेडाका रोगाणुहरूबाट मानिसलाई यो रोग सबभन्दा बढी सर्दछ । अतः यसका सबभन्दा खतरनाक स्रोत भेडा वा बाखा नै हुन्छन् । तर गाई र सुंगुर पनि भेडा वा बाखाको प्रकारका रोगाणुका वाहक हुनसक्छन् ।

तरंग–ज्वरको विकास अवधि ७ देखि ३१ दिनको (औसतमा दुइदेखि तीन हप्ताको) हुन्छ ।

रोगको रूप रोगीको शरीरको प्रतिरोध क्षमताका साथै रोगको व्याधीमूलको किसिममाथि भर पर्दछ । ९८.९६ देखि ९९.५ डिग्रीसम्म ज्वरो आउने रोगको मन्द प्रकारलाई अक्सर बात, क्षय र अरू रोग भन्ठानिन्छ र केही समयपछि प्रयोगशाला प्रशिक्षणद्वारा मात्र ठीक निदान हुन्छ ।

अहिलेसम्म तरंग–ज्वरको निम्नलिखित रूपहरू देखिएको छ: चर्को (३ महीनासम्म), अधः चर्को (३ देखि ६ महीनासम्म), जीर्ण वा लम्बिएको (६ महीनादेखि एक र दुइ वर्षसम्म) र अवशिष्ट (२ वर्ष र बढी) ।

रोग सामान्यतः विस्तार विस्तार बढ्दछ र ज्वरो पहिला उति धेरै हुंदैन । मांसपेशीहरू र जोर्नीहरूमा एकाएक पीडा शुरू हुन्छ । अक्सर रोगीहरू निकै ढीलो र स्पष्ट परिवर्तनहरू, मुख्यतः पेशीलाई गतिशील बनाउने अंगमा, भइसकेपछि मात्र डाक्टरको सहायता लिन आउंछन् ।

चर्को तरंग ज्वरको वेला शुरूदेखि नै ज्वरो बढ्छ र १० देखि १२ दिनसम्म रहिरहन्छ । ज्वरो अगाडि कम्प छुट्छ (यसलाई औलोको कम्पन भन्ठान्न सकिन्छ), पसिना आउंछ र कपाल दुख्छ । कलेजो र फियो बढ्छन्, रस–गांठाहरू (लिम्फ नडहरू) फुल्दछन् र दुख्दछन् । संपूर्ण शरीरभरिका मांसपेशीहरू दुख्न थाल्दछन् । एकदेखि डेढ महीनामा जोर्नीहरूमा परिवर्तनहरू देखापर्दछन्, हलचल कष्टदायक हुन्छ र कहिलेकाहीं जोर्नीहरू सुन्निन्छन् । कम्मरमा ठूला स्नायुहरू संगसंगै पीडा हुन्छ । तरंग–ज्वर आएको वेला अक्सर, हात, कटि र अन्य स्नायुहरूमा बाथ र सूजन हुन्छ। विस्तार विस्तार अरू अंग र प्रणालीहरू यस प्रक्र्यामा संलग्न हुन सक्छन् ।

यस रोग लागेको वेला ज्यादाजसो पेशीलाई गतिशील बनाउने अंगहरू नै प्रभावित हुन्छन् । पीडाको शिकायत गर्दछन् । केही माधौरूहरूमा कलेजो, फियो र जननेन्द्रीय जस्ता आंतरिक अंगहरू प्रभावित हुन्छन् । मधौरूहरू झडङ्गी हुन्छन्, निद्रा राम्रो पर्दैन र रुचि मर्दछ। लामो समयसम्म लगातार कपाल दुखेको देखिएको छ। कहिलेकाहीं श्रवणशक्ति र दृष्टिसमेत बिग्रिन्छ ।

रोगले लामो रूप लिन सक्छ र वर्षौंसम्म रहन्छ, बीच बीचमा अवस्था कहिले बिग्रिन्छ, कहिले केही सुध्रिन्छ। अवस्था बिगार्ने कारणहरूमा अति चोसोपन, शारीरिक बोझ, मानसिक आघात, अति मद्यपान र अरूलाई लिन सकिन्छ ।

मधौरू समयमै डाक्टरकहाँ गएको छ र प्रारंभिक अवस्थामा उपचार शुरू भएको छ भने सामान्यतः ऊ स्वास्थ्यलाभ गर्दछ। कहिलेकाहीं जोर्नी र मांशपेशीहरूमा पीडाको रूपमा अवशिष्ट रहेको पनि देखिन्छ ।

तरंग ज्वरका मधौरूहरूको भोजन विविध; क्यालोरी र भिटामीनसम्पन्न हुनैपर्दछ। रोगको अवस्था गंभीर छ भने मधौरूलाई अस्पताल पठाइन्छ जहाँ उसको खानपिनको रेखदेख डाक्टरले नै गर्दछन् ।

तरंग–ज्वर कुनै पनि उमेरका मानिसलाई आउन सक्छ ।

यस रोगको उपचार विधिको राम्रो विकास भइसकेको छ तापनि, ती प्रत्येक मधौरूका लागि अलग अलग हुन्छन् । त्यसैले रोग लागेको शंका मात्र हुनासाथ डाक्टरकहाँ गइहाल्नुपर्दछ, आफै उपचार गर्ने जोखिम उठाउनु हुंदैन ।

पशुहरूमा तरंग–ज्वरले पशुपालनमा ठूलो क्षति पुर्‍याउंछ । अतः यो रोग दोहरो समस्या उपस्थित गर्दछ: यसले जनस्वास्थ्यमा धक्का पार्दछ र साथै आर्थिक हितमा पनि ।

उच्च तापमानमा यस रोगका कीटाणुहरू मर्ने हुनाले दूधलाई दूषणरहित बनाउन उमालिने वा प्रशोधन गर्ने गरिन्छ । उमाल्दा कीटाणुहरू तत्काल मर्दछन् भने प्रशोधन गरिंदा ७० को तापमानमा गरिएको छ भने तिनलाई मार्न ३० मिनेट लाग्दछ ।

तरंग–ज्वरको टीका १९२० मै दिन थालिएको थियो। निष्क्रिय तुल्याइएको टीकाद्वारा गरिएको रोग मुक्तिले कुनै सकारात्मक परिणाम नदिएकोले, सोभियत वैज्ञानिकले तरंग–ज्वर विरोधी सक्रिय टीकाको विकास गरेका छन् ।

जनतालाई लाग्नसक्ने संभव छुतबाट बचाउन चालिएका रोगनिरोधक टीका र आम स्वच्छताका पाइलाहरूका साथै घरेलु पशुहरूमा तरंग–ज्वर उन्मूलन गर्न चालिएका मौलिक पाइलाहरू यसको नियन्त्रणको सफलताको मुख्य कारण भएको छ ।



कुनै एक जमानामा एक ज्ञानी मान्छे बस्दथे। उनले आफ्ना सुख दुःख दुवै भोगेका थिए। जब उनी बूढो हुँदै गए र मृत्यु नजीकै आउँदै गयो, उनले आफ्नो प्यारो छोरोलाई बोलाएर भने :

"छोरा, तिमी देखिरहेकै छौं, म आफ्नो जीवनको अन्त्य कालमा आइपुगेको छु र कुनै पनि बेला म मर्न सक्छु। मसित जेजति जेथा छ त्यो सबै तिम्रो हुन्छ । अब उप्रान्त तिमीले आफ्नो भाग्यको निर्णय गर्नुपर्दछ। तर मेरो एउटा इच्छा छ–तिमी देशाटनमा निस्क, र जहाँ जहाँ तिमी आवश्यक ठान्दछौ एउटा राम्रो घर बनाऊ । खाँचो पर्दा र दुःख आइलाग्दा तिमी त्यसैमा बस्न सक्छौ ।"

छोरो तुरुन्तै बाबुको इच्छा पूर्ण गर्न घरबाट निस्क्यो।

उसले आफूलाई चाहिने मनग्ये खर्च बोक्यो र विश्वको भ्रमणमा निस्क्यो।

आफ्नो लामो पैदल यात्रामा उसले ठाउँ ठाउँमा राम्रा राम्रा घरहरू बनायो। उसले त्यस्ता थुप्रै घर बनायो र सन्तोष र खुशीका साथ घर फर्क्यो ।

ऊ घर फर्केपछि बाबुले सोधे :

"छोरा, तिमीले मैले चाहेबमोजिम घरहरू बनायौ त ? तिमीलाई कठिन पर्दा आश्रय लिनको निम्ति विश्वमा त्यस्ता घरहरू छन् त ?"

"हो, बुवा, मैले त्यस्ता घरहरू बनाएको छु," छोरोले भन्यो। "पहाडमा अथवा चउरमा, नदी किनारमा अथवा वनको छेउमा जहाँ जहाँ मलाई इच्छा लाग्यो मैले सुन्दर प्रासादहरू बनाएर आएको छु।

बाबुले झोकिएर भने :

"छोरा, तिमीले मेरो कुरै बुझेनछौ । तिमीले मैले भनेका जस्ता घरहरू बनाएनछौ। प्रिय छोरा, खालि प्रासादहरूले आपद र दुःख आइपर्दा कहिल्यै तिमीलाई आश्रय दिने छैनन्। ग्रहैं, मैले तिमीलाई महलहरू बनाउन भनेको थिइन। मैले त तिमीलाई विश्वमा ईमान्दार र विश्वासी मानिस खोज्न र तिनीहरूलाई साथी बनाउन भनेको थिएँ। अनि पो तिमीलाई आपद विपद् आइलाग्दा तिमी तिनीहरूका घरमा आश्रय लिन सक्ने छौ।

"छोरा, मानिसका ईमान्दार र सच्चा मित्र छन् भने उसका निम्ति सधैं घर र स्वर्गको ढोका खुला रहन्छ भन्ने कुरा तिमीले बुझिराखे ।"



# श्री ५ महाराजाधिराज सरकारको सोभियत संघको राजकीय भ्रमणबारे सोभियत पत्रपत्रिकाहरूको विचार

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको सोभियत संघको राजकीय भ्रमण सोभियत–नेपाल सम्बन्धको इतिहासमा एउटा महत्त्वपूर्ण घटना थियो। मौसूफ सरकार सोभियत संघ सवारी हुनु अघि र मौसूफ सरकारको भ्रमणको बेला सोभियत पत्रपत्रिकाहरूले यस घटनाप्रति ठूलो ध्यान दिए ।

**प्राभदा**मा भ. भान्मेलोभद्वारा लेखिएको "बादलमाथिको देश" शीर्षकको लेख छापिएको थियो। उक्त लेखमा नेपालको वर्तमान जनजीवन, उसको विदेश नीति र सोभियत–नेपाल सम्पर्क-हरूको स्थिति र विकासमा प्रकाश पारिएको छ। त्यसमा हाम्रो समयका धेरै समसामयिक समस्या-हरूमा दुइ देशहरूका स्थितिहरूको समानता वा निकटताको पनि उल्लेख गरिएको छ।

"हिमाली चौबाटोमा" भन्ने शीर्षकमा **इजभेस्तिया**मा प्रकाशित म. रोस्तारचुकको लेखमा विगत पच्चीस वर्षमा नेपालमा भएका सामाजिक–आर्थिक रूपान्तरणहरूको विश्लेषण गरिएको छ ।

सोभियत–नेपाल सम्बन्धको चरित्रको वर्णन गर्दै अखबार दुइ दशकदेखि सोभियत–नेपाल सम्बन्धमा कुनै बादल नछाएको कुरा उल्लेख गर्दछ र तिनीहरू सफलतापूर्वक विकसित र सबल भइरहेको कुरामा जोड दिन्छ ।

हिमाली मित्रदेश नेपालका राष्ट्रप्रमुख श्री ५ वीरेन्द्रबाट सोभियत संघको भ्रमण गरिबक्सनु अघि **प्राभदा** र **इजभेस्तिया**ले मौसूफ सरकारको संक्षिप्त जीवनी र फोटो प्रकाशित गरे र नेपालको तटस्थता, असंलग्नता, शान्तिपूर्ण सह–अस्तित्व तथा सबै देशहरूसित सहयोग कायम गर्ने नीति बारे बताए । अखबारहरूले यस सिलसिलामा कुन कुरामाथि जोड दिए भने अन्तरराष्ट्रिय क्षेत्रमा नेपाल अन्तरराष्ट्रिय देतांत, आम तथा पूर्ण निःशस्त्रीकरण र विवादास्पद समस्याहरूको शान्तिपूर्ण रूपले समाधान गर्नको निम्ति र उपनिवेशवाद तथा वर्णभेदवादको विरुद्ध आवाज उठाउंदछ।

नेपालबाट सोभियत संघ सवारी भएको विशिष्ट अतिथिको स्वागत–अभिवादन गर्दै अखबार **भेचेरनिया मस्कभा**ले भन्यो: "यो भ्रमणले दुवै देशहरूका जनताहरूको हितमा, शान्ति र अन्तर्राष्ट्रिय सहयोगको ध्येयको हितमा सोभियत संघ र नेपालका बीच रहेको मैत्रीपूर्ण सम्बन्धलाई अरू विकसित र सुदृढ गर्नमा ठूलो सघाउ पुऱ्याउने छ।"

धेरै सोभियत अखबारहरूले सोभियत संघमा––ताशकन्द, मास्को र किइभमा––श्री ५ वीरेन्द्रको सवारीबारे धेरै सामग्रीहरू छापे ।

**प्राभदा**ले श्री ५ वीरेन्द्रको सम्मानमा सोभियत संघको सर्वोच्च सोभियतको अध्यक्षमण्डल र सोभियत सरकारद्वारा आयोजित रात्रिभोजमा सोभियत राष्ट्रपति निकोलाइ पोदगोर्नीको भाषण र मौसूफ सरकारबाट भाषणको पूरा पाठ छाप्यो। धेरै टीकाकारहरूले हाम्रा देशहरूका बीच सम्बन्ध ठूलो र सानो, विकसित र विकासोन्मुख देशहरूका बीच, विभिन्न सामाजिक तथा राजनीतिक प्रणाली भएका राज्यहरूका बीच मैत्रीको उदाहरण बन्न सक्तछ भनी शाही विशिष्ट अतिथिबाट हुकूम भएका शब्दहरूमाथि जोड दिए ।

अन्तरराष्ट्रिय मामलाहरूको आफ्नो साप्ताहिक समीक्षामा **प्राभदा**ले सोभियत–नेपाल वार्ताहरूको बेला "तिनीहरूमा भागलिनेहरूद्वारा समान तथा पारस्परिक रूपमा लाभदायक सहयोगको आधारमा आपसी सम्बन्धहरूलाई बढाउने र सुदृढ गर्ने साझा आकांक्षा अभिव्यक्त गरियो" भनी लेख्यो। भ्रमणको अन्त्यमा **प्राभदा** र **इजभेस्तिया**ले सोभियत–नेपाल विज्ञप्ति प्रकाशित गरे।

अखबार **मास्को न्यूज**ले खासगरी श्री ५ महाराजाधिराज सरकारको सोभियत संघको राजकीय भ्रमण र सोभियत–नेपाल सम्बन्धको इतिहासबारे अनेकौं लेखहरू प्रकाशित गऱ्यो। तिनीहरूमा राजदूत श्री जगदीश शम्सेर राणाले दिनुभएको अन्तर्वार्ता, नेपालका लागि पहिलो सोभियत राजदूत एम. मेन्सिकोभका संस्मरणहरू, सोभियत–नेपाल व्यापारिक, सांस्कृतिक तथा वैज्ञानिक सम्पर्कहरूबारे, नेपालको विकसित भइ रहेको अर्थव्यवस्थाको निम्ति विशेषज्ञहरूको प्रशि–क्षणमा सोभियत सहायता आदिबारे लेखहरू थिए।

सोभियत टेलीभिजनले श्री ५ महाराजाधिराज वीरेन्द्रको सोभियत संघ भ्रमणप्रति ठूलो ध्यान दियो। त्यसले मौसूफ सरकार सोभियत संघमा राज होइबक्संदाका खबरहरू प्रसारित गऱ्यो। सोभियत टेलीभिजन दर्शकहरूले "प्राचीन नेपालमा नयां जीवन" शीर्षकको नयां वृत्तचित्र हेर्ने मौका पनि पाए। त्यसमा उसको प्राकृतिक सौन्दर्य, नेपाली जनताको प्राचीन संस्कृतिका स्मारकहरू र सोभियत सहायताबाट बनेका परियोजनाहरू देखाइएका थिए ।

मास्कोबाट किइभ सवारी हुनु अघि श्री ५ वीरेन्द्रबाट सोभियत टेलीभिजनमा भाषण बक्स्यो। भाषणमा श्री ५ महाराजाधिराजबाट मौसूफ सरकारको भ्रमण र मौसूफ सरकारबाट गरिबक्सेका वार्ताहरूको ठूलो मूल्यांकन गरि-बक्स्यो। मौसूफ सरकारबाट सोभियत भूमिमा मौसूफ सरकारमा टक्र्याइएको हार्दिक अतिथ्य–सत्कारको निम्ति सोभियत सरकारलाई धन्यवाद बक्स्यो।



# मेदीयो : कीर्तिमानहरूको रिंक

**मिखाइल मारिन**

**मेदीयो खेलकूद नगर हो । यहाँ एउटा उत्कृष्ट स्केटिंग रिंक छ । यो नगर कजाख गणराज्यको जाइलीयस्की अला–ताउ पहाडमा समुद्र सतहभन्दा १६६१ मीटरको उँचाइमा छ । मेदीयोमा १०० भन्दा बढी विश्व कीर्तिमानहरू तोडिइसकेका छन् । आजका १० सर्वोच्च कीर्तिमानहरूमध्ये ६ वटा यही पहाडी स्केटिंग रिंकमा स्थापना गरिएका थिए ।**

पहाडमा स्केटिंग रिंक बनाउने विचारका प्रवर्तक १९४८ मा हेलसिन्कीमा आयोजित विश्व च्याम्पियनशिपमा ५०० मीटरको दौडमा स्वर्ण पदक जित्ने कोन्स्तान्तिन कुद्रयाभ्तसेभ हुनुहुन्थ्यो। कुद्रयाभ्तसेभ खेलाडी उच्च गतिसित "अभ्यस्त" हुनुपर्दछ भन्ने मान्नुहुन्थ्यो, यो कुरा पर्वतीय स्केटिंग रिंकमा निश्चित गर्न सकिन्छ किनकि त्यहाँ स्केट गर्न सजिलो हुन्छ । उहांले पहाडहरूको भ्रमण गर्नुभयो, सोभियत संघमा पहाडी इलाका थुप्रै छन् । १९५२ मा उहाँ कजाखस्तानको राजधानी अल्मा–अता आइपुग्नु भयो र त्यहाँ यसको उपनगरीय क्षेत्र मेदीयोमा उहांले ढुङ्गै ढुङ्गाले भरिएको एउटा सानो ठाउँ फेला पार्नुभयो ।

कुद्रयाभ्तसेभ र उहांका सहयोगीहरूले एउटा बुल्डोजर ल्याएर त्यो ठाउँ सफा गर्नुभयो । केही समयपछि मेदीयाको प्रथम बरफमा प्रथम स्केटरहरू आइपुगे ।

मेदीयो सोभियत स्केटरहरूका लागि विश्व कीर्तिमानमाथि धावा गर्ने गढ र विश्व र यूरोपेली च्याम्पियनशिप र ओलम्पिक खेलकूदको सम्मान मंचमा उक्लिने पहिलो खुडकिलो बन्यो ।

१९५३ मा मेदीयोबाट आएका ओलेग गोन्चारेन्को हेलसिन्की विश्व च्याम्पियनशिपबाट विजय ध्वजा लिएर घर फर्के ।

खेलकूद जगत्ले मेदीयोलाई मान्यता दियो ।

१९६९ मा अल्मा–अताका वास्तुकलाकारहरूले मलाई 'नयाँ' मेदीयोको भ्रमण गर्न निम्त्याए ।

भ्रमण अविस्मरणीय थियो । त्यहां हामीले अपूर्व समतल रिंकमा स्केट गर्‍यौं, यसका स्टचाण्डहरूमा राखिएका आरामदायक कुर्सीहरूमा बस्यौं, आधुनिक हलहरूमा विश्राम गर्‍यौं, सामानहरू राख्ने भूमिगत कोठाहरूमा गयौं, स्केटिंग रिंक नजीकैको पोखरीमा पौडियौं र रेष्टुरां र बारमा स्वादिला कजाख शाश्लिकहरू खायौं । हामीले आधुनिक उपकरणहरू जडिएका पत्रकार कक्ष र रेडियो तथा टेलीभिजन बूथहरू हेर्‍यौं । हामी फिनिश स्नान कक्षहरू, साउनासमा गयौं र त्यहाँ स्नान गरेर एक सुन्दर होटेलमा अगेनू छेउ बसेर सुगन्धित स्थानीय चिया खांदै खेल समाचारहरू बारे कुरा गर्न थाल्यौं ।

यो कुरा मेदीयो स्केटिंग रिंक डिजाइनको अवस्थामा भएको र वास्तुकारहरूको मन र विचारमा मात्र भएको बेला डिजाइन कार्यालयमा भएको थियो ।

त्यस वर्ष स्वीट्जरल्याण्डका प्रसिद्ध वास्तुकलाकार र पर्वतीय निर्माण कार्यका विशेषज्ञ, प्रसिद्ध दाभोस स्केटिंग रिंक र केन्द्रका मालिकहरूमध्ये एक गियोर्ग हेस्लर अल्मा–अता आउनु भएको थियो । अन्तरराष्ट्रिय स्केटिंग संघका मानार्थ सचिवको रूपमा उहांले भावी मेदीयोको नक्शाको विस्तृत जांच गर्नुभयो र आतिथेयीहरूलाई खिन्न नबनाइरहनसक्नुभएन : कसैले कतै



**मेदीयोमा थुप्रै रेष्टूराँ र काफे छन् जहां खेलाडीहरू राम्रो र स्वादिष्ट भोजन गर्न र आफ्नो फुर्सदको समय बिताउन सक्छन् ।**



**मेदीयो स्केटिंग रिंकमा स्थापित चार रेफ्रिजरेटिंग एकाईले बरफलाई बाह्रै महीना राम्रो अवस्थामा राख्दछन् ।**



**रेफरी कोठा र रेडियो टेली-टीकाकारहरूका बुथहरू आधुनिक यन्त्र–उपकरणहरूले सज्जित छन् । ती बुथहरू सुविधाजनक ठाउँमा बनाइएका छन् र बाहिरो होहल्लाबाट पूर्णतः सुरक्षित छन् ।**



**मेदीयोको पौडी खेल्ने पोखरी बाह्रै महीना सबैको निम्ति खुला छ । जाडोमा पानी तताइएको हुन्छ ।**

7076



स्केटिंग खेल्नेहरू तालीम लिइरहेका ।

यस्तो स्केटिंग रिंक बनाउन सक्ला, उहांले …नुभयो, तर २०--२५ वर्षपछि मात्र । अल्मा–अताका वास्तुकारहरू यो रिंक दुइ वर्षमा बनाउने योजना गर्दैछन् भन्ने बताइएपछि हेस्लर शिष्टतावश मुस्कुराउनु मात्र भयो ।

दुइ वर्षपछि, डिसेम्बर २८,१९७२ का दिन मेदीयोको औपचारिक उद्घाटन समारोहमा सरिक हुन गियोर्ग हेस्लर फेरि अल्मा–अता आइपुग्नुभयो ।

रिंक देखेपछि, स्टयाण्डहरूमा राखिएका आरामदायक कुर्सीमा बसेपछि, यसको पौडी पोखरीमा पौडिएर स्वदिला कजाख शाश्लिक खाएपछि अन्तरराष्ट्रिय स्केटिंग संघका सचिवले आश्चर्य व्यक्त गर्नुभयो. "गजब, कल्पनै गर्न नसकिने कुरा !"

दुइ वर्षमा अल्मा–अताका मजदूरहरूले १०,५०० वर्ग मीटर कृत्तिम स्केटिंग रिंक भएको आधुनिक खेलकूद स्थल निर्माण गरेका थिए । त्यहाँ विशेष रेफ्रिजरेटर प्रणाली, दर्जनौं जीम, मैदान र धावन पथ, पौडीपोखरी, १६०० स्पटलाइट, २५०० का लागि सुविधापूर्ण माल-सामान राख्ने कोठा, १०,३५० दर्शक बस्ने ठाउँ र २१५० मानिस उभिने ठाउँ, प्राविधिक सेवाहरू र वैज्ञानिक चिकित्सा केन्द्र थिए ।

सोभियत राज्यले यसका निर्माताहरूलाई विज्ञान, संस्कृति, इंजिनीयरिंग, वास्तुकला र उत्पादनमा ठूलठूला उपलब्धिहरूका … गरिने राजकीय पुरस्कार प्रदान गऱ्यो ।

मेदीयो शहर मुख्यतः स्केटरहरूका लागि निर्माण गरिएको थियो र यसको औचित्य प्रमाणित भइसकेको छ । मेदीयोमा तालीम प्राप्त तात्याना अभेरिना, गालिना स्तेपान्स्काया, येभगेनी कुलिकोभ, भालेरी मुरातोभ र यूरी कोन्दाकोभ आदि स्केटरहरूले इन्सब्रूक ओलम्पिक खेलकूदमा चार स्वर्ण, दुइ रजत र चार कांस्य पदकहरू जित्नुभयो ।

तर पदक र कीर्तिमानहरू नै महत्त्वपूर्ण कुरा हैन। स्केटिंग खेलकूदका हज्जारौं प्रेमीहरूका लागि एक नयां, सुन्दर आधुनिक पर्वतीय खेलकूद स्थल खडा हुनु त्योभन्दा महत्त्वपूर्ण कुरा हो ।

**मेदीयो पहाडी स्केटिंग रिंगकमा कैयन असाधारण खेलकूद परिणाम हासिल गरिएका छन् ।**





